मानवका लागि मानवअधिकार
मानवअधिकारका लागि उपयुक्त संस्कृति

# प्राची

पूर्णाङ्क ५०, जेठ ०६१
(May 2004)

संचेतना द्वैमासिक

प्रगतिशील साहित्य वादविवाद र प्रतिवाद- तपाईलाई चुनौती दिन्छ

पत्रपत्रिकालाई दिइने विज्ञापनमा चाकडी

प्राची

तथाकथित युवा लेखनका लेखकहरु

उद्देश्यहीन चलचित्र "मनको बाँध" सफल कथाको अभावमा



# शान्ति सबैको चाहना

## Peace for All

स्थायी शान्तिको आधार !

सामाजिक न्याय र मानवअधिकार !!



अनौपचारिक क्षेत्र सेवा केन्द्र (इन्सेक)
कलंकी, स्युचाटार
पोष्ट बक्स नं. २७२६, काठमाण्डौ, फोन : ४२७८७७०, फ्याक्स : [illegible]
e-mail : insec@insec.org.np, Web-site : www.insec.org.np

मानवका लागि मानवअधिकार
मानवअधिकार लागि
उपयुक्त संस्कृति

# प्राची

संचेतना द्वैमासिक

वर्ष १३, पूर्णाङ्क ५०, जेठ २०६१

# ५० औं अङ्क



**संस्थापक**
सुशील-प्रकाश

**सल्लाहकार**
सुबोधराज प्याकुरेल
कुन्दन अर्याल

**सम्पादक**
प्रकाश ज्ञवाली

**आवरण/ले-आउट**
गोविन्द त्रिपाठी

**फोटो**
विमलचन्द्र शर्मा, इन्सेक

**व्यवस्थापन**
शैलेश शर्मा

**अनौपचारिक क्षेत्र सेवा केन्द्र (इन्सेक)**
द्वारा प्रकाशित




पत्र मन्जुषा : २७२६ काठमाण्डौ
टेलिफोन - ४२७८७७०
फ्याक्स : ४२७०५५१
इमेल : insec@insec.org.np
वेबसाइट : www.insec.org.np

**मुद्रक**
जगदम्बा प्रेस
हात्तिवन, ललितपुर

प्राची जसरी विभिन्न खास-खास विषयवस्तुमा केन्द्रित भएर प्रकाशित भएको छ, त्यो सराहनीय छ। त्यसैगरी मानवअधिकारको मुद्दालाई नै उठाउने, यसमा समावेश गरिएका साहित्यिक सामग्रीहरु पनि अधिकारमुखी भएको हामीले देखेका छौं। त्यसैले यसलाई मैले नेपालमा मानवअधिकारको विषयलाई केन्द्रविन्दु बनाएको नौलो प्रकाशनको रुपमा हेरेको छु।



४४

**क्रिया-प्रतिक्रिया र सम्पादकीय**



पुस महिनाको प्राचीमा प्रकाशित चेतप्रकाशसम्बन्धी लेखले मेरो ध्यान केन्द्रित गराएको छ। मानवअधिकारकर्मी चेतप्रकाश खत्रीको मृत्युका बारेमा सरकारले कुनै किसिमको छानबिन गर्न नसकेकोबाट सरकारलाई मुर्दा सरकारको संज्ञा दिँदा कत्ति पनि फरक पर्दैन। चेतप्रकाश खत्रीले आफ्नो कार्यक्षेत्रमा मानवअधिकारको चेतना बढाउँदा-बढाउँदै वीरगती प्राप्त गरे। उनको पार्थिव शरीर हाम्रो सामू नभए पनि उनी मरेका छैनन्। जबसम्म हामी मानवअधिकार कार्यकर्ता रहन्छौं, जबसम्म मानवअधिकार रहन्छ, खत्री जीवितै रहन्छन्।

– **खेमराज सेढाई "नेपाली"**, सृजनशील मा.अ. शिक्षा रेडियो श्रोता क्लब, चितवन

प्राचीको नियमित पाठकमध्ये एक हुँ। तर, प्राची नियमित हुन नसकेका कारण नियमित पाठकको हक, हैसियत वा अधिकार नै सुरक्षित भएको छैन। प्राचीमा समावेश गरिएका विषयवस्तु संग्रहणीय र पठनीय छन्। तर, द्वैमासिक पत्रिका भएका कारण दस्तावेज संग्रहका रुपमा संग्रहणीय र पठनीयका साथसाथै समसामयिक विषयका सम्बन्धमा रोचक, घोचक टिकाटिप्पणी, आलोचना, दृष्टिकोण आदि पनि हुनुपर्ने हो। अहिले देशमा भइरहेको विद्रोहका कारण मानवअधिकार उल्लंघन, त्यसको परिणाम आदिका सम्बन्धमा कतिपय सूचना र मानवअधिकारसम्बन्धी धारणा त पाइन्छ। त्यसका साथै, राज्य पक्ष र विद्रोही पक्षका त्यस्ता घटनाका सम्बन्धमा धारणा, उनीहरुको प्रतिबद्धता र व्यवहारलाई समेट्न सके अझै राम्रो होला।

– **पिताम्बर भट्टराई**, काठमाडौं

प्राची प्रत्येक अंकमा छुट्टाछुट्टै विषय लिएर आउने भएकाले लोकप्रिय छ। आवरण पनि निकै स्तरीय छ। प्राचीको असोज अंक हात पार्न सफल भएँ। प्राचीको सो अंकमा महिला कानुन, समान अधिकार जस्ता मिठा खुराक छन्। एकादेशकी राजकुमारी, सीता किन फर्किनन् जस्ता लेख ज्यादै लोकप्रिय र मार्मिक छन्। र, यो अंकले महिलाको सवालबारे प्रष्ट पारेको छ। वास्तवमा महिला अधिकार के हो, संविधानले के अधिकार दिएको छ भन्ने जस्ता यथास्थिति प्रष्ट पारेको छ र आफ्नो स्तरियतामा अझ नौलो आयाम थपेको छ।

– **राजु पोखरेल**, पञ्चधुरा मानवअधिकार शिक्षा रेडियो श्रोता क्लब, माइस्थान-५, महोत्तरी

मानवका लागि मानवअधिकार, मानवअधिकारको लागि उपयुक्त संस्कृति भन्ने मूल नारा लिई अघि बढेको मानवअधिकार संस्था इन्सेकको द्वैमासिक प्रकाशनको पूर्णांक ४९ समयमै हात पऱ्यो। प्राचीमा समेटिएको अध्यक्षको कलमले राजनीतिक पार्टीका व्यक्तिहरुलाई दह्रो सुझाव दिएको छ। उता महासचिवको पातो अन्तर्गत नियमित लेख्दै आउनुभएका कुन्दन अर्याललाई धन्यवाद दिनैपर्छ। पत्रकारिता पेशामा महिलाहरु किन र कसरी, कस्तो तरिकाले लाग्दैछन् भन्ने लेखले समाजमा महिलाको निम्ति र समग्र राष्ट्रकै निम्ति आशालाग्दो कुरालाई उहाँले कोट्याउन खोज्नुभएको छ। नेपालमा बेपत्ता पारिने समस्या र राष्ट्रिय मानव अधिकार आयोग शीर्षकको लेखको दायाँपट्टिको बक्समा राखिएको "मन्त्री नहुँदा के भनियो?" भन्ने समाचारले नेताहरुको द्वैधचरित्रको स्पष्ट अनुहार खुलाएको छ। सशस्त्र द्वन्द्वको भूमरीमा बालअधिकार, द्वन्द्वका सामाजिक उपलब्धीहरु, महिला विरुद्ध हिंसा र सोह्र दिने अभियान र बेपत्ता: नागरिक अधिकारको हनन शीर्षकका लेखहरुले मानवअधिकारप्रति चासो राख्ने जो-कोहीलाई पनि राम्रो खुराक दिएका छन्। आगामी दिनमा पनि यस्तै जल्दाबल्दा समस्याहरु उजागर गर्ने खालका लेख पढ्न पाइयोस्। यसमा देशका विभिन्न ठाउँमा काम गरिरहनु भएका ग्रामीण मानवअधिकार कार्यकर्ताहरुको संस्मरण, अनुभव एवम् पीडितहरुको प्रत्यक्ष आवाजलाई समेट्न सक्ने बनाइयोस्।

– **भुमराज तिवारी**, अध्यक्ष मानवअधिकार शिक्षा रेडियो श्रोता क्लब, नुवाकोट

कायरहरु हत्यामा विश्वास गर्छन् र सृजनाका कोपिलाहरुलाई चुँडालेर रगतको होली खेल्छन्। हत्यामा विश्वास गर्नेहरु प्रगतिको पाइलामा रगतको पंजाछाप कुल्चेर प्रगतिपथमा पुग्न सकिने अधुरो सपनाको वृत्तचित्रमा अल्मलिने गर्छन् र मानवताको वकालतमा जुटेकाहरुको विरुद्धमा व्यक्तिगत रिसइवीदेखि आडम्बरको खोल बचाउन खनिने गर्दछन्। त्यही नियतिको शिकार भएका स्वर्गीय चेतप्रकाश खत्रीमा भावपूर्ण श्रद्धाञ्जलि।

सम्पादक ज्यू, शिक्षालाई सर्वाङ्गिण विकासको श्रोत मानिन्छ, विकासको पूर्वाधार मानिन्छ तर हाम्रा विद्यालयहरु द्वन्द्वको मारमा परेर बन्द भइरहेका छन्। त्यही दर्दनाक पीडा झल्कने "लेन्सबाट" को लागि विमलचन्द्र शर्मालाई धन्यवाद। "युनिफाइड कमाल" कार्टूनले हालको सरकारको नांगो रुप प्रस्तुत गरेको प्रष्ट छ। अध्यक्ष र महासचिवको पातामा कोरिएका विचारहरु उल्लेख्य छन्। प्रेक्षा ओझाको लेखले मानवअधिकारको विश्वव्यापी घोषणापत्रको सान्दर्भिकताका बारेमा छर्लंग पारेको देखिन्छ भने सुशील प्याकुरेलले नेपालमा बेपत्ता पार्ने क्रमको अमानवीय र क्रूर कार्यको भर्त्सना गर्दै यस्तो कार्य मानव हीतविरुद्ध भएको ठहर गर्नुभएको छ। नरहरि आचार्यज्यूको विचार कार्यान्वयन तहसम्म जानु आवश्यक छ। अन्यथा, "भालुलाई पुराण" वा "लोखर्केको कथा" मात्र हुन्छ। "छिस्स" फेरि हरायो, अब नहराओस् है। अन्य सामग्रीहरु पठनीय छन्।

– **नानिबाबु घिमिरे**, अध्यक्ष, मा.अ. शिक्षा रेडियो श्रोता क्लब, सिन्धुली

# सम्पादकीय

०२९/३० सालमा जन्मिएको 'प्राची' ले ४९ भन्दा बढी अंकहरू पार गरिसकेको छ। यसको ५० औं अंक योभन्दा अगाडि नै गणना भइसक्ने थियो होला । तर, ०२९/३० देखि ०४९ सम्म एकरूपताको साथ र व्यवस्थित ढंगले यसको प्रकाशन सम्भव भएन। सामाजिक परिवर्तनको अभियानमा साच्चिकै पूर्वको घाम बनेर उदाएको प्राचीले प्रगतिशील विचारधाराको माध्यमबाट आफ्नो दायित्व निर्वाह गरेको थियो। यसका ती अंकहरू अहिले हामीले देख्न अनि पाएका छैनौं। ०४९ यता प्राची संचेतना द्वैमासिकको रूपमा प्रकाशन हुन थालेपछि ४९ अंक प्रकाशन भइसकेका छन्। र, हामीले यही १२ वर्षे छोटो इतिहासलाई जोडेर स्वर्ण अंक प्रकाशन गर्दैछौं। तर, पक्कै हो- त्यसअधिको १९-२० वर्षे इतिहास प्राचीलाई आजको अवस्थामा ल्याइपुर्‍याउने महत्वपूर्ण कालखण्ड हो। त्यसकै जगमा उभिएर अहिले हामी प्राचीको कुरा गर्दैछौं, मानवअधिकार संस्कृतिको कुरा गर्दैछौं, प्रगतिशील विचारधारा र सामाजिक परिवर्तनको अभियान बोकेको प्राचीको इतिहासमा गर्व गर्दैछौं।

स्वर्ण अंकसम्म आइपुग्दा यसले अनेकौं कालखण्ड पार गरेको छ। पञ्चायती निरंकुश व्यवस्थाबाट निस्किएका प्राचीका कतिपय अंकहरू हाम्रा लागि गणनीय हुन सकेनन् तर तिनकै जगमा उभिएका छन्, प्राचीका ४९ अंक, जसको गणनीय इतिहास हाम्रो फाइलमा सुरक्षित हुन पुगेको छ। प्राचीको इतिहास यसका संस्थापकहरू हुनुहुन्छ। कठोर प्रशासनिक छेकबारका बेला कालान्ध पारिएका अंकहरू त हामीले फेला पार्न सकेनौं तर त्यही कालरात्रीको बेला आशाको दियो बनेको प्राचीको इतिहासलाई कायम राख्न अब भने ठूलो मेहनतको आवश्यकता हामीले बोध गरेका छौं।

प्राचीका संस्थापकहरूमध्ये एक प्रकाश काफ्ले हामीबीच हुनुहुन्न। तर, प्राची संचेतना द्वैमासिकका रूपमा प्रकाशन हुनथालेको पहिलो अंकको सम्पादकीयले प्रण गरेझैं हामीले केवल उहाँले छोडेर जानु भएका ज्याधानक्षरा उहाँले बाँकी राखिदिनुभएको रोझा फुटाउन थाल्नुपर्दछ। बहुदलीय व्यवस्थामा प्राचीले पक्कै पनि उज्यालो देखाउन सफल भएको छ। बादलका घेरा तोड्दै धर्तीसम्म आएका किरणहरूझैं आशा बोकेको प्राचीको उद्देश्य पूरा गर्न हामीले अझ ठूलो मेहनत गर्नु आवश्यक छ।

आमसञ्चारको विकास र सूचना प्रणालीको अद्भूत उन्नतिले सृजना गरिदिएका सुविधा छन्, अहिले हामीसँग। इन्सेकको दरिलो संस्थागत परिचय छ, अहिले हामीसँग। प्राची शुरुवात गर्दा यस्तै सुविधाहरू हुन्थेहोलान् त, पक्कै पनि इतिहास अझ स्वर्णिम हुनेथियो। तसर्थ, प्राची उत्साहित हुनुपर्छ। अवसरहरूसँगै चुनौति पनि समानान्तर भएर आउनसक्छन्। सामना गर्ने प्रण गर्नुपरेको छ हामीले। पचासौं अंकसम्म आइपुग्दा प्राचीले टड्याएका औंलाहरू, प्राचीले देखाएका बाटाहरू र प्राचीले दिएका प्रेरणाहरू सुसंस्कृत मानवअधिकारका लागि हुन्, जीवनशैलीमा मानवअधिकार अन्तस्करणका लागि हुन्। प्राचीका अडानहरू आफ्नो अधिकार मात्र खोजेर दायित्व बिर्सने प्रवृत्तिविरुद्ध उभिएका छन्, अरूको अधिकारको सम्मान गर्ने परिपाटी बसाल्ने लामो यात्रामा प्रतिबद्ध छन्। र, यो यात्रा एक्लैले सम्भव छैन। यसका लागि त हामी सबैका भावनाहरू बाँधिनुपर्छ, काँधहरू मिल्नुपर्छ मानवअधिकारका लागि, उपयुक्त संस्कृतिका लागि।

प्राचीको यात्रामा यहाँहरू सबैको सहयोगी हातहरू मिल्ने अपेक्षासहित।



# प्राचीलाई सलाम

सुबोधराज प्याकुरेल

**निरंकुशता विरुद्धको आन्दोलनमा पूर्वको सूर्योदयका रूपमा मानवअधिकारको सिद्धान्त निष्ठा बोकेर जन्मिएको प्राची, जनजिब्रोका हिसाबले वयस्क भइसकेको छ। अझै प्राचीले धेरै जंघार तर्नुछ। जनताको पक्षबाट धेरै बलियासँग संघर्ष गर्नुछ। चेतनाको प्राची, जागरणको न्यानो घाम, प्राचीलाई सलाम ! प्रकाशले थालेको प्राची अमर छ।**

तीन दशकको खण्डित यात्राका क्रममा प्राचीले सुवर्ण अंकको पाइलो टेकेछ। ०४६ पछिका तन्नेरीलाई पत्रिका छाप्नुअघि सिडिओ अफिसमा सेन्सरका लागि पुऱ्याउनु पर्थ्यो, त्यहाँ उहाँहरुलाई मन नपरेका अक्षरहरुमा कालो पोतिदिन्थे, अनिमात्र बजारमा ल्याउन पाइन्थ्यो भन्ने कुरा अचम्म लाग्ला। तर, त्यस्तै हुने गर्थ्यो। प्राचीका ती पुराना कालाम्यै पारिएका अंकहरु कहाँ होलान् ?

मानवअधिकारको विश्वघोषणा पढेपछि हामीलाई कौतुहल जागेको थियो। यति सुन्दर कल्पनाका साथ, मानिसलाई आफ्नो स्वामी आफै हुन प्रोत्साहित गर्ने राज्यसत्ता र अन्तर्राष्ट्रिय सहकर्मी सम्भव होला र ? भनेर। पछि-पछि नागरिक र राजनीतिक अधिकार अनि आर्थिक, सामाजिक, सांस्कृतिक अधिकारका महासन्धि पनि पढ्दा थाहा पाइयो, मानिस साँच्चिकै स्वामी नै हुँदा रहेछन्। मान्छेलाई संगठित, स्वतन्त्र र अभिव्यक्त हुन दिने हो भने समाजले अनुकूल गति स्वत: समात्छ र आफ्ना गल्ती, कमजोरी आफै सच्याउँदै अगाडि बढ्छ। स्वतन्त्रता भन्दा प्यारो वस्तु चेतनशील मानिसका लागि अरु केही हुँदैन। स्वतन्त्र व्यक्तिहरुको संगठनले नै शक्ति दिन्छ। त्यसले नै प्रत्येक वर्ग, समुदायको स्वामित्वको रक्षा गर्छ।

हिजोको पञ्चायती निरंकुशता विरुद्ध यहि चेतनाका कारण हामी आन्दोलनमा होमियौं। निरंकुशता कागजबाट सकियो। मानसिकतामा सकिएन। किनभने, निरंकुशतालाई मलजल गर्ने चुनावी खेलमा सुमसुम्याउने प्रवृत्ति राजनीतिमा हावी भयो।

यतिबेला मुलुक फेरि आन्दोलनमा छ। आन्दोलन सबैका लागि विश्वविद्यालय हो। आन्दोलनमा साझा नारा मात्र लगाइन्न। आलोचनाका समवेत स्वरहरु पनि उरालिन्छ। नेताहरुले जनता परीक्षकका सामुन्ने कसीमा घोटिनु पर्छ। जो आलोचनाको घेराभित्र हुन्छ उसैले जिम्मेवारी पाउन र चलाउन सक्छ। जसलाई पुजा मात्रै, दान भेटी मात्र मन पर्छ, उसले त खोपीमा बसेर घण्ट ध्वनी, धुप सुगन्ध र मिठाइ गुलियोमा रमाएको जाती।

निरंकुशता विरुद्धको आन्दोलनमा पूर्वको सूर्योदयका रुपमा मानवअधिकारको सिद्धान्त निष्ठा बोकेर जन्मिएको प्राची, जनजिब्रोका हिसाबले वयस्क भइसकेको छ। अझै प्राचीले धेरै जंघार तर्नुछ। जनताको पक्षबाट धेरै बलियासँग संघर्ष गर्नुछ। चेतनाको प्राची, जागरणको न्यानो घाम, प्राचीलाई सलाम ! प्रकाशले थालेको प्राची अमर छ।

●

# प्राचीले समेटेको नागरिक तथा राजनीतिक अधिकार

- कुन्दन अर्याल



मानवअधिकार पत्रिका प्राचीको हालसम्मको अंकमा नागरिक तथा राजनीतिक अधिकारहरुलाई निरन्तररुपमा समेटिदै आएको देखिन्छ। यस आलेखमा यही विषयमा समीक्षा गर्ने प्रयत्न गरिएको छ। इन्सेकद्वारा मानवअधिकार आवधिक पत्रिकाका रुपमा प्रकाशित हुँदै आएको प्राचीमा नागरिक तथा राजनीतिक अधिकारलाई विविध ढंगले उठाउने सवालमा एकरुपता रहेको स्पष्ट देखिन्छ। नागरिक तथा राजनीतिक अधिकारको व्यवहारिक अवस्थालाई दर्शाएर यसको सैद्धान्तिक पक्षमा पाठकलाई प्रष्ट पार्ने सवालमा प्राचीका अंकहरु सफल देखिएका छन्। यसको स्वर्ण अंकमा यसका विगतका अंकहरुको समीक्षा गर्ने उद्देश्यका साथ यो आलेख तयार पार्न खोजिएको हो। यस संक्षिप्त आलेखमा प्राचीमा अहिलेसम्म छापिएका नागरिक तथा राजनीतिक अधिकारसम्बन्धी सामग्रीहरुका सम्बन्धमा सामान्य चर्चा गरिएको छ। सामग्रीहरुको चिरफार भने गरिएको छैन।

नागरिक तथा राजनीतिक अधिकारहरु सम्बन्धी संयुक्त राष्ट्रसंघीय प्रतिज्ञापत्रले प्रत्याभूत गरेका अधिकारहरुकै सेरोफेरोमा रहेर आलेखलाई अगाडि बढाइएको छ। तसर्थ, प्रतिज्ञापत्रले प्रत्याभूत गरेको राजनीतिक सहभागिता र अभिव्यक्ति स्वतन्त्रताका सम्बन्धमा प्राचीमा समेटिएका सामग्रीहरु नै आलेखका विषयवस्तु बनेका छन्, बन्ने गरेको छ। यही क्रममा प्राचीमा छापिएका भेदभाव, यातना वा दूर्व्यवहार विरुद्धको अधिकारसम्बन्धी सामग्रीहरुको सरसर्ति समीक्षा गरिएको छ।

**नागरिक तथा राजनीतिक अधिकारको दृष्टिकोण**

प्राची संचेतनाको पहिलो अंक द्वैमासिकका रुपमा ०४९ साल भदौ-असोजमा प्रकाशित भएको थियो। प्रजातन्त्रको पुन: वहालीपछि प्रकाशित हुन थालेको प्राचीका हालसम्म प्रकाशित कूल ४९ अंकमध्ये ४२ वटा अंक राजा ज्ञानेन्द्रको प्रतिगमनभन्दा अघि छापिएका थिए। प्राचीका ती अंकहरुले मानवअधिकारका दृष्टिका साथ त्यसबेलाको यथार्थ तस्वीर प्रस्तुत गरेका छन्। ०५९ असोज-कार्तिकमा प्रकाशित पूर्णांक ४३ मा मानवअधिकार र प्रजातन्त्र एकै सिक्काका दुई पाटा हुन् भन्ने तथ्य आत्मसात गर्दै आवरण पृष्ठमा लेखिएको छ– शाही घोषणाप्रतिको असहमति।

प्राचीको पहिलो अंकको सम्पादकीयमै नेपालमा नागरिक तथा राजनीतिक अधिकारहरुको इतिहासका विषयमा चर्चा गरिएको छ। निर्वाचन, मानवअधिकार र प्रजातन्त्रजस्तो मौलिक हकका विषयमा पनि छुट्टै लेख प्रस्तुत गरिएको छ। छयालीस सालपछिको पहिलो निर्वाचित सरकारका समयमा भएका प्रहरी ज्यादतिको विवरण प्राचीमा समेटिएका छन्। पहिलो अंकमै निर्वाचित सरकारको पालामा भएको मानवअधिकार उल्लंघनका सम्बन्धमा विस्तृत प्रतिवेदन प्रकाशित गरिएको छ। यातना हिंसात्मक प्रवृत्तिको उपज हो भन्ने शीर्षकमा स्वर्गीय प्रकाश काफ्लेको लेख पनि पहिलो अंकमा समेटिएको छ।

०४९ कार्तिक-मंसिरको समय प्रजातन्त्रमा बहुमतका नाममा भएको ज्यादतिका कारण निकै तात्तिएको थियो। प्राचीको दोश्रो अंकको सम्पादकीयमा त्यसबेलाको नागरिक तथा राजनीतिक अधिकारको अवस्थाको मूल्यांकन यसप्रकार गरिएको छ- विषम धरातलका दुई चिजहरुबीच तुलनै हुन सक्दैन। पञ्चायतकालमा हुने गरेका मानवअधिकारका भाषणहरुलाई आजको अवस्थासँग दाँजेर मूल्यांकन गर्न मिल्दैन। अनि आजको अवस्थालाई आजकै परिप्रेक्ष्यमा हेर्दा सबै कोणका मानवअधिकार कार्यकर्तालाई भन्न करै लागेको छ, सरकारद्वारा मानवअधिकारको सवाललाई गौण ठान्ने चिन्ताजनक प्रवृत्तिको शुरुवात भएको छ।

जबसम्म आमरुपमा जनता नै अधिकार र दायित्वबारे जानकार हुँदैनन्, तबसम्म मानवअधिकार एउटा नारामा मात्र सीमित हुन जान्छ। त्यसैले नै इन्सेकले मानवअधिकारको मुद्दालाई आमजनतासम्म पुर्‍याउन सचेतन कार्यक्रमको शुरुवात गरेको छ। र, त्यसैक्रममा

जबसम्म आमरूपमा जनता नै अधिकार र दायित्वबारे जानकार हुँदैनन्, तबसम्म मानवअधिकार एउटा नारामा मात्र सीमित हुन जान्छ। त्यसैले नै इन्सेकले मानवअधिकारको मुद्दालाई आमजनतासम्म पुऱ्याउन सचेतन कार्यक्रमको शुरूवात गरेको छ। र, त्यसैक्रममा मानवअधिकारसम्बन्धी यो पत्रिकाको हामीले शुरूवात गरेका छौं। प्राचीको पूर्णाङ्क ९ मा छापिएको स्वर्गीय प्रकाश काफ्लेको यो विचार उहाँले प्रारम्भिक तयारीका क्रममा लेख्नु भएको थियो।



मानवअधिकारसम्बन्धी यो पत्रिकाको हामीले शुरुवात गरेका छौं। प्राचीको पूर्णांक ९ मा छापिएको स्वर्गीय प्रकाश काफ्लेको यो विचार उहाँले प्रारम्भिक तयारीका क्रममा लेख्नु भएको थियो।

संचेतना द्वैमासिक प्राचीमा नागरिक तथा राजनीतिक अधिकारको सवालले शुरुवातदेखि नै महत्व पाउँदै आएको देखिन्छ। ०४९ साउनमा प्रकाशित संयुक्तांक १०, ११ र १२ मा नागरिक तथा राजनीतिक अधिकारहरुको उल्लंघन भएको तत्कालीन अवस्थालाई नै आवरण कथा बनाइएको छ– प्रहरी ज्यादतिको छानविन गरियोस्। तत्कालीन अवस्थाको चित्रण गर्न हरिभक्त कटुवालको एक पंक्ति आवरण पृष्ठमै छापिएको थियो:

*हामीले उत्साहले उडाएको सेतो परेवा*
*धर्मराउँदै खस्छ धरातलमा,*
*बारुद बारुद गन्हाउँछन् उसका पखेटा*
*बारुद बारुद गन्हाउँछ, उसको श्वास*

मानवअधिकारको तत्कालीन दुरावस्थाका सम्बन्धमा ०५१ साल साउन-भदौमा प्रकाशित पूर्णांक १५ मा पनि विस्तारपूर्वक छापिएको छ। प्राचीको पूर्णांक ९ मा केन्द्रीय कारागारको पृष्ठभूमिमा लेखिएको छ– निर्धक्क भएर पसेको छैन जेलभित्र मानवअधिकार। ०४९ साल माघमा प्रकाशित यस अंकमा नेपालका जेलहरुको दुरावस्थाका सम्बन्धमा विस्तृत रिपोर्टिङ प्रकाशित गरिएको छ। ०५३ साल पुस-माघ, पूर्णांक १९ मा नागरिक तथा राजनीतिक अधिकारको उपहास राजनीतिकर्मीहरुबाटै भएको सम्बन्धमा वडो आकर्षक ढंगले आवरण कथा सजाइएको छ– भेडा बाखाभन्दा सस्ता सांसद्हरु। यही अंकमा अपराधको बैसाखीमा राजनीति, राजनीतिको छातामुनि अपराध शीर्षकमा नागरिक अधिकारमाथिको थिचोमिचोलाई प्रकाशमा ल्याइएको छ। ०५७ साल साउनमा प्रकाशित प्राचीको पूर्णांक ३० मा भेदभावको उल्लेखनीय उदाहरणका रुपमा रहेको छुवाछूत र त्यसविरोधी आन्दोलनलाई आवरण कथा बनाइएको छ। यस अंकमा डा. शिव शर्माद्वारा दलित समुदायमा गरिवी व्याप्त रहेको तथ्य उजागर गर्दै तयार गरिएको




अनुसन्धानमूलक आलेख प्रकाशित भएको छ। यही अंकमा जेलको दुरावस्थासम्बन्धी विवरणात्मक लेख प्रकाशित गरिएको छ।

०५७ साल असोजमा प्रकाशित प्राचीको पूर्णांक ३१ को आवरण कथा छ– नेपाली साहित्य र मानवअधिकार। कवि धरणीधर कोइरालाद्वारा सम्वत १९७५ मा नागरिक अधिकारका निम्ति गरिएको कवितात्मक आव्हानलाई समेत उद्धृत गर्दै शार्दूल भट्टराईद्वारा गरिएको विवेचना त्यस अंकको सबभन्दा महत्वपूर्ण सामग्री हो।

*देश बन्धुहरु हो। उठ जाग*
*लाग उन्नति विषे अव लाग*
*धोउ धोऊ मनको अब मैलो*
*फालिदेऊ डरको थैलो।*

०५७ साल मंसिरमा छापिएको प्राचीको पूर्णांक ३२ मा महिलाविरुद्धको भेदभाव अन्त्यको पक्षमा लेखिएका दुई वटा लेखहरु छापिएका छन्। ०६० साल असोजमा प्रकाशित पूर्णांक ४८ मा पनि महिला अधिकारको सवाललाई आवरण कथा बनाइएको छ। त्यसपछिको अंकमा बेपत्ता पारिने क्रमको विरुद्धमा आवरण कथा नै बनाइएको छ। आवरण पृष्ठमा यस्तो दुःखद यथार्थ औंल्याइएको छ– ...बहुदलीय व्यवस्थाको स्थापना भएपछि गैरन्यायिकरुपमा मृत्युदण्ड दिने र बेपत्ता बनाउने काम राज्यबाट हुने छैन भन्ने आशा गरिएको थियो। ...तर बिडम्बना बहुदलीय व्यवस्थाको स्थापनापश्चात् ०५० साल असार ११ गते प्रभाकर सुवेदीलाई

बेपत्ता बनाएर संविधानले दिएको अधिकार सर्वप्रथम उल्लंघन गर्ने काम राज्यबाट भयो। पूर्णांक ४९, पुस ०६० मा बेपत्ता : नागरिक अधिकारको हनन शीर्षकमा पुन: उही विषयलाई नयाँ ढंगमा उठाइएको छ। प्राचीले पहिलोपटक ०५० साल भदौ-असोजमा प्रकाशित पूर्णांक १३ मा यो विषयलाई यसरी उठाएको थियो– पञ्चायत गयो स्वेच्छाचारी गिरफ्तारीको प्रचलन गएन।

०५३ कार्तिक-मंसिरको पूर्णांक १८ को आवरण कथा यातनाका विषयमा बनाइएको छ– नेपालका प्रहरी हिरासतहरु मृत्युकेन्द्रमा परिणत। पूर्णांक २१, माघ-फागुन ०५४ नेपालमा मृत्युदण्ड कायम छ या छैन ? विषयमा आवरण कथा तयार गरिएको छ। जीवनको अधिकारका सम्बन्धमा यस अतिरिक्त अन्य अंकहरुमा पनि विविध सामग्रीहरु प्रकाशित गरिएका छन्। ०५७ चैतको पूर्णांक ३४ मा माओवादी हिंसाको सन्दर्भलाई समेट्दै जीवनको अधिकारका बारेमा विस्तृत सामग्री प्रस्तुत गरिएको छ। यही अंकमा जनयुद्ध र महिलामाथिको हिंसा शीर्षकमा दर्दनाक विवरण मात्र होइन, हिंसात्मक गतिविधीसम्वन्धी रिपोर्ट पनि छापिएको छ।

माओवादी समस्याको शुरुवात र पछिल्लोरुपका विषयमा प्राचीमा सिलसिलाबद्धरुपमा अध्ययन गर्न सकिन्छ। ०५३ साल भदौ–असोजमा प्रकाशित पूर्णांक १७ माओवादी समस्याको शुरुवातका कसरी




भयो भन्ने विषयमा अध्ययन गर्न चाहनेहरुका निम्ति अति महत्वपूर्ण छ। माओवादी गतिविधिको उद्‌गमस्थल रोल्पा, रुकुममा भएका राज्यको दमनका बारेमा यस अंकमा विस्तृत विवरण छापिएको छ। प्राचीले शान्तिका पक्षमा पनि महत्वपूर्ण सामग्रीहरु प्रस्तुत गरेको छ। ०५९ साल माघ-फागुनमा प्रकाशित पूर्णांक ४५ मा आवरण पृष्ठमै ठूला-ठूला अक्षरमा माग गरिएको छ– बन्द हुनुपर्छ सधैंका लागि नेपालीले नेपालीलाई मार्न।

प्राचीको एक दशकको यात्रा अवधिमा समेटिएका इतिहासका अति उल्लेखनीय घटनाहरुमध्येको एक ०५८ जेठ




१९ गतेको राजदरबार हत्याकाण्ड पनि हो। पूर्णांक ३५ मा यही विषयलाई आवरण कथा बनाइएको छ। नागरिक तथा राजनीतिक अधिकारको सन्दर्भमा नारायणहिटी काण्डपछिको अवस्थाको विश्लेषण गर्दै सुबोधराज प्याकुरेलको टिप्पणीमा भनिएको छ– सात समुन्द्रपारीका सञ्चारले दोहोऱ्याइरहेको अवस्थामा राज्यसत्ताको एक महत्वपूर्ण संस्थाको समाचारलाई सार्वभौमसत्ता सम्पन्न जनताको पहुँच बाहिर सिमेन्ट, ईंटाको पर्खालभित्र कैद गर्ने प्रयास गरियो। सरकारको यो लाचारीले हामी नेपाली मध्ययुगीन सामन्ती प्रथामा कैद छौं भन्ने सन्देश संसारभरी पुऱ्यायो।

त्यसक्रममा अभिव्यक्ति स्वतन्त्रता र




सात समुन्द्रपारीका सञ्चारले दोहोऱ्याइरहेको अवस्थामा राज्यसत्ताको एक महत्वपूर्ण संस्थाको समाचारलाई सार्वभौमसत्ता सम्पन्न जनताको पहुँच बाहिर सिमेन्ट, ईंटाको पर्खालभित्र कैद गर्ने प्रयास गरियो। सरकारको यो लाचारीले हामी नेपाली मध्ययुगीन सामन्ती प्रथामा कैद छौं भन्ने सन्देश संसारभरी पुऱ्यायो।

माओवादी समस्याको शुरुवात र पछिल्लोरुपका विषयमा प्राचीमा सिलसिलाबद्धरुपमा अध्ययन गर्न सकिन्छ। ०५३ साल भदौ–असोजमा प्रकाशित पूर्णांक १७ माओवादी समस्याको शुरुवातका कसरी भयो भन्ने विषयमा अध्ययन गर्न चाहनेहरुका निम्ति अति महत्वपूर्ण छ। माओवादी गतिविधिको उद्गमस्थल रोल्पा, रुकुममा भएका राज्यको दमनका बारेमा यस अंकमा विस्तृत विवरण छापिएको छ।




नेपाली प्रेसमाथि भएको आक्रमणका सम्बन्धमा पनि प्राचीको यो अंकमा पर्याप्त सामग्री प्रस्तुत गरिएको छ। ०५९ मंसिर-पुसमा प्रकाशित पूर्णांक ४४ मा यस विषयमा अत्यन्त व्यवस्थितरुपमा सामग्री प्रस्तुत गरिएको छ। यसको आवरण कथा यस्तो छ– व्यक्तिगत स्वतन्त्रता भर्सेस प्रेस स्वतन्त्रता।

प्राचीमा छयालीस साल लगत्तैको अवस्थादेखि प्रतिगमनको घटनाक्रमसम्म समेटिएको छ। तसर्थ, प्राचीका सम्पूर्ण अंकहरुको संकलनमा प्रजातन्त्र प्राप्तिपछिका समयमा प्रजातन्त्रका वाहकहरुको अप्रजातान्त्रिक क्रियाकलाप र शैलीको जानकारी मात्र पाइँदैन। प्राचीमा मूलरुपमा प्रजातन्त्रका वाहकहरुकै




क्रियाकलाप र कमजोरीका कारण कसरी प्रतिगनका निम्ति राजा ज्ञानेन्द्रको आँट पुग्यो भन्नेसम्मको विश्लेषण गर्ने आधार पाइन्छ। ०५८ साल माघमा प्रकाशित संयुक्तांक ३८–३९ मा संकटकालको एक महिनाको समीक्षा गरिएको छ। संकटकालले नागरिक तथा राजनीतिक अधिकारउपर पारेको असरका सम्बन्धमा यस अंकमा तथ्यगत विवरण दिइएको छ।

०५८ साल चैतमा प्रकाशित प्राचीको चालीसौं अंकमा माओवादी हिंसाका क्रममा बढ्दो क्रुरतासम्बन्धी अत्यन्त सामयिक सामग्री प्रस्तुत गरिएको छ। यस अंकमा यातनाविरुद्धको अधिकारका पक्षमा




मात्र होइन, संकटकालमा भएको मानवअधिकारको उल्लंघनका सवालमा समेत अनुगमन सामग्री प्रस्तुत गरिएको छ।

**निष्कर्ष**

प्राचीले मानवका लागि मानवअधिकार, मानवअधिकारका लागि उपयुक्त संस्कृति भन्ने मूल अभिष्टलाई हरेक अंकमा पछ्याएको छ। मानवअधिकार अभियानको प्रभावकारी वाहकका रुपमा यसले आफ्नो आग्रह र अडानलाई हरेक अंकमा सुस्पष्टरुपमा अघि सारेको छ। हरेक महत्वपूर्ण समसामयिक घटनाक्रमलाई मानवअधिकार, सामाजिक न्याय, शान्तिप्रतिको प्रतिबद्धता हुँदै त्यही दृष्टिकोणका साथ विश्लेषण प्रस्तुत गर्नु नै प्राचीको मौलिकता हो।

*(मानवअधिकार संचेतना द्वैमासिकका रुपमा प्राचीको सम्पादन अर्यालले थालनी गर्नु भएको हो। तीन दशकअघि स्वर्गीय प्रकाश काफ्ले र उहाँका अनन्य मित्र सुशील प्याकुरेलद्वारा सामयिक संकलनका रुपमा प्रकाशित प्राचीलाई ०४९ सालमा काठमाडौं जिल्ला प्रशासन कार्यालयमा मानवअधिकार पत्रिकाका रुपमा दर्ता गराइएको हो।)*

# प्राचीका अंकलाई आर्थिक सामाजिक पक्षबाट नियाल्दा

- सुरेश आचार्य

मानवअधिकारको प्रश्नमा सधैं राजनीतिक अधिकार अग्रपंक्तिमा देखा पर्ने गर्छ। आम सञ्चारका माध्यमले पनि राजनीतिक अधिकारलाई नै प्राथमिकता दिएको देखिन्छ। राजनीतिक अधिकारको बहालीविना अरु अधिकारको सुरक्षा असंभवप्राय: छ। नेपालको पछिल्लो राजनीतिक घटनाक्रमले पनि राजनीतिक अधिकारमाथि चुनौती आउँदा अरु अधिकारहरु कटौती हुँदै गएको प्रष्ट देखाएको छ। त्यसैले राजनीतिक अधिकारको प्रश्न जहिले पनि प्रबल हुनु अस्वभाविक होइन भन्ने निष्कर्ष निकाल्न गाह्रो छैन। तर, राजनीतिक अधिकारलाई मात्र मूल विषय बनाईंदा अरु अधिकारको संरक्षण र विकास हुन सक्दैन भन्ने तथ्य पनि बिर्सन मिल्दैन। नेपालको पछिल्लो १२ वर्षको अनुभवले यो तथ्यलाई पनि प्रमाणित गरेको छ।

अनौपचारिक क्षेत्र सेवा केन्द्र (इन्सेक) द्वारा प्रकाशित प्राचीले एक दशक पार गरेको छ। इन्सेक आफै मानवअधिकार आन्दोलनले जन्माएको संस्था हो। तसर्थ, प्राचीले मानवअधिकारका विषयलाई समेट्नु यसको कर्तव्य हुने नै भयो। भर्खरै भनिएझैं, राजनीतिक अधिकारका प्रश्नमा नै प्राचीका उनन्चास अंक केन्द्रित छन् भन्दा गलत मूल्यांकन हुँदैन। तर, यो पूर्ण सत्य पनि होइन। प्राचीले आर्थिक, सामाजिक अधिकारका पक्षमा पनि आफ्नो परिचय स्थापित गर्ने कोसिस नगरेको छैन। प्राचीका झण्डै १० अंकमा आर्थिक, सामाजिक पक्षले प्राथमिकता पाएको छ।

मानवअधिकारको क्षेत्र व्यापक छ। यस अर्थमा सबै पक्षलाई बराबरीकै हिसाबले समेट्ने हो भने पनि आर्थिक, सामाजिक अधिकारको पाटो भागबण्डामा २० प्रतिशत नपर्न पनि सक्छ। तर योचाहिं सत्य होइन, प्राचीले सबै प्रश्नलाई समान ढंगले उठाएका कारण आर्थिक, सामाजिक पक्षको भाग २० प्रतिशत लागेको हो।

उठाइएका विषयहरु थुप्रै छन्। आर्थिक, सामाजिक प्रसंगमा चेलीबेटी वेचबिखन र देह व्यापार, कमैया प्रथा र त्यसको उन्मूलन, चेपाङ जातिको अवस्था, छुवाछूत, बोक्सी प्रकरण, बालश्रम, भूमिसुधार- प्राचीको प्राथमिकतामा परेका विषय भने यति नै हुन्। विषय अरु पनि उठेका छन्। मुद्दा उठाएर पनि टुंगोमा पुऱ्याउन सकेको विषय चाहिं कमैया मुक्ति नै हो। वास्तवमा कमैया आन्दोलनको जश अनौपचारिक क्षेत्र सेवा केन्द्र (इन्सेक) लाई दिनैपर्छ। समाजमा इन्सेकको परिचय विभिन्न रुप र रंगमा पाइएको छ। मानवअधिकारका सबै विधामा इन्सेकले सही र सत्य मात्रै गऱ्यो भन्न सजिलो छैन। तर, हरेक विषयमा नकारात्मक दृष्टिकोण राख्नु पनि गलत हुन्छ।

०४९ पुस-माघको अंकमा प्राचीले कमैयाका बारेमा संक्षिप्त उठान गरेको थियो, कमैया प्रथाको। कमैयालाई बुझाउन त्यसबेला एउटा उदाहरण दिइएको थियो- कञ्चनपुर जिल्लाको खेदतमुलीका छिदुवा खेनाले गाउँका एकजना साहुसँग ०३४ सालमा जेठो छोराको विवाह गर्न पाँच हजार ऋण लिएका थिए। उनले ११ विगाहा जमीन साहुलाई बुझाउँदा पनि साहुको चित्त बुझेन र दुई वर्ष साहुको कमैया बसे। ऋणको मुख अझै ठूलो भयो। उनले तीन छोरा र एउटी बुहारीलाई पनि साहुको कमैया वनाए र दश वर्ष भन्दा बढी भइसक्यो- सारा परिवार साहुको बँधुवा बनेको छ। तर सौंकी घटेको छैन, पचास हजार पुगिसक्यो।

१५ वर्षका बीच पाँच हजारको ऋण कहाँ पुग्यो ? यो ब्याजको दर पत्ता लगाउन ठूलै गणितज्ञलाई पनि मुश्किल पर्न सक्छ। यो एउटा सामान्य उदाहरण मात्र हो।



**आर्थिक, सामाजिक प्रसंगमा चेलीबेटी बेचबिखन र देह व्यापार, कमैया प्रथा र त्यसको उन्मूलन, चेपाङ जातिको अवस्था, छुवाछूत, बोक्सी प्रकरण, बालश्रम, भूमिसुधार– प्राचीको प्राथमिकतामा परेका विषय भने यति नै हुन्। विषय अरू पनि उठेका छन्। मुद्दा उठाएर पनि टुंगोमा पुऱ्याउन सकेको विषय चाहिं कमैया मुक्ति नै हो। वास्तवमा कमैया आन्दोलनको जश अनौपचारिक क्षेत्र सेवा केन्द्र (इन्सेक) लाई दिनै पर्छ।**




मानिसलाई कामको बन्धक बनाउने नेपालको मध्य र सुदूरपश्चिममा रहेको यो कुप्रथाले अब कानुनी हैसियत राख्दैन। तर, अब ती क्षेत्रमा कुनै कामका बन्धक छैन भन्नचाहीं कठीन छ।

यो आलेखमा यो पनि प्रष्ट गरिएको छ- इन्सेकले ०४८-४९ मा ११ महिनासम्म बर्दिया, कैलाली र कञ्चनपुरका कमैयाहरुको अध्ययन गरेको थियो। अर्थात्, यो आन्दोलनलाई मानवअधिकार आन्दोलनको मूल धारमा ल्याउने काम इन्सेकले गऱ्यो। ०५७ सालमा आइपुग्दा कमैयाहरु आफैं आफ्नो अधिकार खोज्ने अवस्थामा पुगे। पूर्व मन्त्री शिवराज पन्तको घरमा बसेका १९ जना कमैयाको बिद्रोह श्रमिक दिवस अर्थात् मे १ का दिन शुरु भयो। पन्तको घरमा तीस वर्षदेखि कमैया बस्दै आएकाहरु श्रमको ज्याला खोज्न मात्र जुर्मुराएनन्, कमैया मुक्तिको माग लिएर जिल्ला प्रशासन कार्यालयमा पुगे।

उनीहरुलाई यहाँसम्म पुऱ्याउन इन्सेकले निरन्तर गतिविधि चलाउँदै आयो। ०४८ मा सर्भे, ०४९ मा प्रतिवेदन प्रकाशन, ०५० मा कमैया साक्षरता तथा सचेतना कार्यक्रम, सर्वोच्च अदालतमा मुक्तिका लागि मुद्दा र प्रस्तावित ऐनको मस्यौदा, ०५१ मा कमैया मुक्ति अभियान, ०५२ मा कमैया मुक्ति मञ्चको गठन र कमैया बालबालिका तथा व्यवसायिक शिक्षा र ०५३ मा कमैया सरोकार समूह गठन गरेर नीति निर्मातालाई झकझक्याउनेदेखि कमैयालाई जागरुक बनाउने अभियान चलाइरह्यो। ०५६ मा नवलपरासी, दाङ, रुपन्देही, कपिलवस्तु र बाँकेमा पनि कमैयाका बारेमा अध्ययन गऱ्यो।

शिवराज पन्तविरुद्ध सडकमा आवाज उठेको तीन महिना हुन नपाउँदै सरकारले ०५७ साउन २ गते कमैयालाई मुक्त गर्ने घोषणा गऱ्यो। सरकारले यो घोषणा गर्दा कमैयाहरुले तिर्न बाँकी सबै ऋण मिनाहा गऱ्यो। प्राचीका लागि यो भन्दा खुशीको खबर अरु नहुनु पर्थ्यो। तर साउनको अंकमा प्राचीले विषय त समेट्यो, तर त्यो खुशी समेटेको दखिएन। त्यसबेला प्राचीमा कृष्ण गौतमले लेखेका थिए- निर्णय भन्दा महत्वपूर्ण कार्यान्वयन हो। यो पाटो साढे



मुक्त कमैया परिवार

तीन वर्षको मुक्तिका अवधिमा कमैयाका लागि निकै खट्किएको छ र इन्सेकले यो मामिलामा थकाइ मार्न पाएको छैन।

प्राचीले प्राथमिकता दिएको अर्को विषय हो- छुवाछुतविरुद्धको अभियान। साउन ०५७ को अंकमा लहानका चमार जातिले भोग्नु परेको छुवाछूतका बारेमा मुख्य समाचार छापिएको छ। यो मुद्दाको शुरुवात पनि एउटा घटनाबाट भएको छ। ०५६ साल चैत ४ गते लहानका चमारले सिनो उठाउन मानेनन्। उनीहरुका विरुद्ध समाजका तथाकथित भद्रभलाद्मीहरुले बहिष्कारको अभियान नै चलाए। उनीहरुलाई पानी बाहेक त गरिएकै थियो, काम नै नदिने सामाजिक निर्णय गरियो। यो मुद्दा जिल्ला प्रशासन कार्यालयमा मात्र सीमित रहेन। पीडितहरुले प्रधानमन्त्रीकहाँ समेत उजुर गरे। शुरुमा दलित मानवअधिकार तथा जातीय भेदभाव सरोकार केन्द्रले यो विषयलाई उठायो। धेरै मानवअधिकार संस्थाहरु यो मुद्दाका पछि लागे। इन्सेकले यसको नेतृत्व लियो र बैशाख २३ गते दलित र चमारहरुसँग सहभोजको आयोजना गऱ्यो। यो अभियानले दलित मुक्तिका लागि महत्वपूर्ण योगदान गरेको छ। दलित आयोग बनाउन सरकारलाई दबाब दिने काम यो अभियानले पनि गरेको थियो भन्नु गलत हुनेछैन।



बोक्सीका समाचार आजभोलि अखबारका राम्रै समाचार बन्ने गरेका छन्। बोक्सी लागेका कारण उपचारका क्रममा मारिने घटना राजधानी शहरमै भएको थियो भन्दा अनौठो पनि लाग्नसक्छ। तर यो एउटा यथार्थ घटनालाई सजीव ढंगमा उतारेर प्राचीले एउटा अर्को आन्दोलन थालेको थियो। ०५४ साल बैशाखको अन्तिम साता मैतीदेवीमा एक महिलालाई बोक्सी उतार्ने नाममा धामीले यातना दिंदा उनको ज्यान गुम्यो।

३२ वर्षकी सरस्वती अधिकारीको यो कथापछि राजधानीको सडकमा ठूलो जुलुस नै निस्क्यो। थुप्रै मानवअधिकार संस्थाले यसको विरोधमा सरकारको ध्यानाकर्षण गराए। वास्तवमा प्राचीले टिप्पणी गरे जस्तै यो एउटा मध्ययुगीन अवशेष नै थियो। धमिनी गंगा केसीले तीन दिनसम्म सरस्वतीलाई डाडु र पन्यू तताएर शरीरभरी डाम्ने र खुर्सानीको धुवाँ लगाउने मात्र गरिनन्, छालाको पेटीले पिट्ने र रगत नछाड्ुन्जेल एक थोपा पानी खानसमेत नदिने गरेर यातनामय "उपचार" गरिन्।

यस्ता घटना फेरि अखबारमा आएका छैनन्। समाचार बन्न नसकेका होलान्। तर त्यही अंकमा उठाइएको बोक्सीमाथिको कारवाही धेरै पटक समाचार बनेका छन्। बोक्सी भनेर अपमान र यातना भोगेकी मरनीदेवी अहिले सामाजिक कार्यकर्ता बनेर जन्मेकी छिन्। सञ्चार माध्यमले यस्ता घटनालाई सार्वजनिक गर्ने नगरेको र मानवअधिकारकर्मीहरुले यस्ता घटनाविरुद्ध अभियान नचलाउने गरेको भए धेरै मरनीदेवीको अस्वभाविक मरण हुने थियो। कतिपयलाई अहिले पनि भ्रम छ, अखबारले यस्ता घटनाको समाचार बनाएकाले घटना झन् बढेका छन्। तर समाचार बन्न लागेकाले यी घटना बाहिर आएका मात्र हुन्। त्यो समाजमा समाचारको असर नकारात्मक होइन, सकारात्मक नै परेको छ।

बेखबर चेपाङ जातिको प्रसंग सामाजिक परिवर्तनका पक्षमा प्राचीले उठाएको लोभलाग्दो पक्ष हो। कर्णालीका हुम्ला, जुम्ला र डोल्पाको के कुरा गर्नु, ती त धेरै टाढा छन् राजधानीबाट। उनीहरुले ००७ सालमा आएको प्रजातन्त्र ०१३ सालमा थाहा पाए अरे। तर राजधानीसँग जोडिएको धादिङमा यस्तो जाति पनि छ, जसलाई राजनीति कुन चराको नाम हो भन्ने नै थाहा छैन। त्यही जाति हो, चेपाङ।

हुन त किसान आन्दोलनमा चेपाङ जातिका मानिस शहीद पनि भए भनिएको छ। तर, शिक्षाको अभावमा गरिबीलाई नियति ठान्दै आएका चेपाङ जातिमा चेतनाको स्तर निकै तल छ। कैलाली, कञ्चनपुरका थारु जातिले त उनीहरु कमैया भएको थाहा पाए र आन्दोलन पनि गरे तर राजधानीसँगै टाँसिएर बसेका चेपाङहरु अर्काको घरमा किन बस्दै आएका छन्, उनीहरुलाई थाहा छैन। जसलाई थाहा छ, उनीहरुसँग त्यसको विकल्प छैन। र, यिनीहरुलाई मुक्त गर्न कसैले अभियान पनि चलाएको छैन। उनीहरु समाचारका विषय बन्दै आएका छन्। तर अझै मानवअधिकार आन्दोलनको विषय बन्न सकेका छैनन्। प्राचीले चेपाङहरुको खबर त खोजेको छ, तर मुक्ति खोज्ने अभियान थाल्न सकेको छैन।

महिला बेचबिखन हाम्रो मुलुकको एउटा राम्रो आय स्रोत भएको पेशा हो। वेश्यावृत्तिलाई आफ्नो रोजाइको पेशा बनाउनु अधिकार हो ? यो लेखकलाई पनि थाहा छैन। पेशा बनाउनेहरुका लागि यो आयमूलक व्यवसाय हुँदै हो। तर थाहै नदिई,




प्राचीले प्राथमिकता दिएको अर्को विषय हो- छुवाछूतविरुद्धको अभियान। साउन ०५७ को अंकमा लहानका चमार जातिले भोग्नु परेको छुवाछूतका बारेमा मुख्य समाचार छापिएको छ। यो मुद्दाको शुरुवात पनि एउटा घटनाबाट भएको छ। ०५६ साल चैत ४ गते लहानका चमारले सिनो उठाउन मानेनन्। उनीहरुका विरुद्ध समाजका तथाकथित भद्रभलाद्मीहरुले बहिष्कारको अभियान नै चलाए। उनीहरुलाई पानी बाहेक त गरिएकै थियो, काम नै नदिने सामाजिक निर्णय गरियो। यो मुद्दा जिल्ला प्रशासन कार्यालयमा मात्र सीमित रहेन। पीडितहरुले प्रधानमन्त्रीकहाँ समेत उजुर गरे।




फुक्याएर, प्रेम गरेको बहाना गरेर वेश्यालयमा बेच्नेहरुका लागि पनि यो राम्रो पेशा बन्दै आएको छ। वेश्या बनाइनुको पीडा भोग्नेहरुलाई नै थाहा हुँदो हो। यद्यपि, राजधानी नै जोडिएका अरु दुई जिल्ला नुवाकोट र सिन्धुपाल्चोकमा अझै पनि यो प्रतिष्ठाको व्यवसाय हो। त्यसैले यी दुई जिल्लालाई देहव्यापारको उद्‌गम स्थलका रुपमा चित्रण गरेर प्राचीले विषयको उठान गरेको थियो।

यो उठानमा वेश्यावृत्तिलाई सकारात्मक व्याख्या गर्नेहरुमाथि प्रहार गरिएको थियो। र, त्यो रिपोर्टले कहाँ, कसरी र कसको संरक्षण र संलग्नतामा मानिसको व्यापार चलेको छ भन्ने खुलासा गर्न खोजेको थियो। तर प्राचीका पछिल्ला अंकमा यो विषय प्राथमिकता क्षेत्रबाट स्वाट्टै हटेको छ। पेशा कसैको स्वेच्छाको रोजाइ होला, तर भारतका वेश्यालयमा पुऱ्याइने अधिकांश नेपाली युवतीहरु फुक्याएर पुऱ्याइएका हुन्छन्। अहिले धेरै मानवअधिकारकर्मीहरु यसका विरुद्ध सक्रिय छन् र यो अभियानले कसैलाई मन्त्री पनि बनाएको छ। यसो भनेर मानवअधिकारका क्षेत्रमा लाग्ने जो कसैले यो विषय उठाउनै छाड्नु राम्रो देखिँदैन।

प्राचीले उठाएका सामाजिक, आर्थिक पक्षका कुरा गर्दा भूमिसुधारको पाटोलाई छाड्न मिल्दैन। ०५८ साल साउन ३२ गते शेरबहादुर देउवाको सरकारले भूमिसुधार कार्यक्रमको घोषणा गरेपछि प्राचीले यो प्रसंगलाई गम्भीररुपमा उठाएको छ। सरकारले घोषणा गरेको कार्यक्रमका पक्षमा निस्केका जुलुसलाई मात्र यसले समेटेन, यसका सकारात्मक र नकारात्मक पक्षलाई राम्रैसँग केलाउने कोसिस गरेको छ। तर एक महिना पनि नबित्दै यो कार्यक्रम असफल हुनुमा नेताहरुको मानसिकता दोषी देखियो। यसलाई विचारका रुपमा उदांगो पार्ने मात्र नगरेर घटनाक्रमका आधारमा उधिन्न सकेको भए अझ सशक्त प्रस्तुति हुन सक्थ्यो कि ?

भूमिसुधारको प्रसंगमा प्राचीको धारणा छ- "राष्ट्रिय अर्थतन्त्रको विकासले गति लिन नेपालमा क्रान्तिकारी भूमिसुधार गर्नु पर्दछ। भूमिसुधारलाई केवल जमीनको हदबन्दी र जोत कायम गर्ने जस्ता सीमित विषयमा केन्द्रित गराइनु हुँदैन। भूमिसुधार गर्दा जमीनको न्यायपूर्ण वितरण गर्ने तथा माटोमा काम गर्ने, खनजोत गर्ने व्यक्ति तथा खेतीमा लागेका किसानकै स्वामित्वमा जमीन हुनु पर्दछ।" कमैया प्रथाविरोधी आन्दोलन चलाएको प्राचीले भूमिसुधारको प्रसंगमा कमैयाको सन्दर्भ राम्रोसँग जोड्न सकेको छैन। मानिसलाई कमैया बनाउने भूमिको असमान वितरण कमैया प्रथाको मूल जरो हो। यो जरोमा एकपटक गरिएको प्रहार पर्याप्त र प्रभावकारी भएन भन्दैमा निराश हुनु जरुरी छैन। तर यसपछिका अंकमा भूमिसुधारको प्रसंग आवश्यक मात्रामा उठाउन बिर्सेको आरोप प्राचीमाथि लाग्नु राम्रो हुँदैन।

५० अंकको हाराहारीमा आइपुग्दा बढ्दो बालश्रमबारे प्राचीले निकै चासो देखाएको छ। बालश्रम शोषणका आ-आफ्ना रुप छन्। तर घरको काममा सहयोग पुऱ्याएर आफ्नो शिक्षालाई अगाडि बढाएको प्रसंग अन्तर्राष्ट्रिय कानुनका सन्दर्भमा बालश्रम शोषणको परिधिमा समेटिनसक्ला। तर आफ्नै घरायसी कामलाई यस ढंगमा परिभाषित गर्न थालियो भने हुने काम पनि बिग्रने डर हुन्छ। मानवअधिकार आन्दोलनमा लागेकाहरुले व्यवहारिक विषयलाई बिर्सन मिल्दैन। प्राचीले बालश्रमलाई सम्पादकीयको विषय बनाएर साँच्चै श्रम शोषणको विपक्षमा आफूलाई केन्द्रीत गरेको सुन्दर पक्षलाई अरु बाल अधिकारका पक्षपोषकहरुले पनि ग्रहण गर्नु उपयुक्त होला। ४७ औं अंक सम्पूर्ण विषयवस्तु नै बालश्रम शोषणमा केन्द्रीत गरेर समस्या कति जटील हो भन्ने सन्देश यसले दिएको छ।

समग्रमा प्राचीले उठाएका आर्थिक, सामाजिक विसंगतिका मुलभूत विषय यिनै हुन्। समाजका विसंगत पक्ष यति मात्र निश्चय पनि होइनन्। तर सबैलाई बोकेर पार लगाउँछु भन्नु पनि यथार्थ धरातललाई बिर्सनु जस्तो हुन्छ। जसरी कमैया प्रथाको अन्त्यका लागि प्राचीले अभियान शुरु गऱ्यो, त्यस ढंगमा आफूले उठाएका मुद्दालाई पार लगाउन हरसंभव प्रयत्न जारी राख्नुपर्छ। यसले प्राचीको विश्वसनियता र जनमानसको समर्थन प्राप्त गर्न सहयोग पुऱ्याउनेछ।

●

**भूमिसुधारको प्रसंगमा प्राचीको धारणा छ- राष्ट्रिय अर्थतन्त्रको विकासले गति लिन नेपालमा क्रान्तिकारी भूमिसुधार गर्नु पर्दछ। भूमिसुधारलाई केवल जमीनको हदबन्दी र जोत कायम गर्ने जस्ता सीमित विषयमा केन्द्रित गराइनु हुँदैन। भूमिसुधार गर्दा जमीनको न्यायपूर्ण वितरण गर्ने तथा माटोमा काम गर्ने, खनजोत गर्ने व्यक्ति तथा खेतीमा लागेका किसानकै स्वामित्वमा जमीन हुनु पर्दछ।**

# महिला अधिकार सचेतनाका लागि प्राची

- इन्दिरा फुयाल

सञ्चार चेतनाको बाहक हो। सञ्चारले नै मानिसलाई सचेत र सबल बनाउँछ भन्ने कुरा जगजाहेर विषय हो। अनौपचारिक क्षेत्र सेवा केन्द्र (इन्सेक) ले यस तथ्यलाई मनन गरेर प्रारम्भदेखि नै आमसञ्चारका विभिन्न माध्यमहरुलाई मानवअधिकार सचेतनाको अभिन्न माध्यमका रुपमा प्रयोग गर्दै आएको छ। इन्सेकले आफ्ना मासिक, द्वैमासिक, त्रैमासिक, चौमासिक र वार्षिक प्रकाशनहरुमार्फत् मानवअधिकारका विषयवस्तुलाई आम जनसमुदायसमक्ष पुऱ्याउँदै आएको छ। यस लेखमा तीमध्ये इन्सेकले प्रकाशन गर्दै आएको "प्राची" संचेतना द्वैमासिकले महिला अधिकारका विषयमा आम पाठकहरुलाई सचेत पार्न के-कति योगदान गर्न सफल भयो ? के-कस्ता पक्षमा सुधार गर्न बाँकी रहे र यस पत्रिकाको ४९ अंक प्रकाशनबाट के-कस्ता कुराहरु सिकिए ? भन्नेबारे समीक्षा गर्ने प्रयास गरिएको छ।

यस लेखमा विशेषत: प्राचीमा समेटिएका महिला अधिकारका क्षेत्रहरु, प्राचीमा महिला अधिकारबारे लेख्ने महिला वा पुरुष के-कति देखिए ? प्राचीमा महिला अधिकारका विषयले के-कति ठाउँ पाए ? प्राचीले उठाएका क्षेत्रहरुमा राष्ट्रिय चासो कस्तो रहेको छ ? प्राचीले आगामी दिनमा सोच्नुपर्ने क्षेत्रहरु कुन-कुन हुन सक्छन् ? आदि विषयहरु समेटिएको छ।

**प्राचीमा समेटिएका महिला अधिकारका विषयहरु**

१. महिलाहरुको स्थिति विश्लेषण
२. सशस्त्र द्वन्द्व र महिला
३. महिला सशक्तिकरण र उत्प्रेरणाका लागि प्रेरक प्रसंग
४. कानुन र महिला
५. महिला अधिकारका लागि संस्थागत प्रयास र स्थायित्व

**१. महिलाहरुको स्थिति विश्लेषण**

प्राचीले महिला अधिकारका क्षेत्रमा




**प्राचीका १ देखि ४९ अंकमा प्रकाशित महिलाविरुद्ध हिंसा र सशस्त्र द्वन्द्वसम्बन्धी लेख रचनाहरुको सूची**

| वर्ष | अंक | शीर्षक | लेखकको नाम | लेखक/ लेखिका | रचनाको प्रकार |
|---|---|---|---|---|---|
| १० | ३६ | सरकारसँग सोधौं आशा खनाल कहाँ छिन् | इन्सेक | | घटना विवरण सत्य तथ्य |
| १० | ३७ | महिला विरुद्धको हिंसा र त्यसको अन्त्यको प्रयास | सुजिता शाक्य | महिला | लेख |
| ९ | ३४ | जनयुद्ध र महिला हिंसा | कविता अर्याल | महिला | लेख |
| ११ | ४४ | नेपाली समाजमा महिला विरुद्ध हुने हिंसा | निर्मला महत | महिला | लेख |
| ११ | ४१ | माओवादी गतिविधि, संकटकाल र महिला अधिकार | इन्दिरा फुयाल | महिला | लेख |
| १२ | ४६ | शान्तिमा महिला | इन्दिरा फुयाल | महिला | लेख |
| १२ | ४९ | महिलाविरुद्ध हिंसा र सोह्र दिने अभियान | इन्दिरा फुयाल | महिला | लेख |
| १२ | ४८ | शान्ति स्थापनामा महिला | जगदीश दाहाल | पुरुष | लेख |
| १२ | ४८ | वर्तमान द्वन्द्वले महिलामा पारेको असर | इन्दिरा फुयाल | महिला | लेख |

## प्राचीका १ देखि ४९ अंकमा प्रकाशित महिलाहरूको वर्तमान स्थिति झल्काउने लेख रचनाहरूको सूची

| वर्ष | अंक | शीर्षक | लेखकको नाम | लेखक/लेखिका | रचनाको प्रकार |
|---|---|---|---|---|---|
| १ | २ | बेस्यावृत्तिलाई प्रतिष्ठित पेशा ठान्ने खतरनाक रोग फैलँदैछ | रामशरण प्याकुरेल | पुरुष | लेख |
| १ | २ | डिम्पलले सुनको दांत ल्याइन्, सम्मान उतै गुमाइन् | मीना शर्मा | महिला | घटना विवरणमा आधारित लेख |
| १ | ३,४,५ | सिन्धुको चेलीबेटी व्यापार<br>छोरी बेचेर टिनको छाना हाल्ने चलन | केदार कोइराला | पुरुष | स्थलगत रिपोर्ट |
| १ | ३,४,५ | वादीहरुलाई विकल्प प्रदान गर्ने दायित्व पनि सरकारकै हो | लता प्याकुरेल | महिला | स्थलगत रिपोर्ट |
| १ | ३,४,५ | जारी प्रथा नारी स्वतन्त्रताको मार्गमा गंभीर वाधा | मन्जु थापा | महिला | स्थलगत रिपोर्ट |
| १ | ६ | औंस्याही नीशा | स्व. विनोद घिमिरे | पुरुष | कथा |
| २ | १४ | सतहभित्रको हुम्ला बेग्लै छ | इन्सेक | | स्थलगत रिपोर्ट |
| ५ | २ | देहव्यापार तथा चेलीबेटी बेचबिखनको स्थिति | कञ्चन प्रियदर्शी | पुरुष | लेख |
| ५ | २ | टोलभित्र | विवश वस्ती | पुरुष | कथा |
| ५ | ३ | अधेरो अझै थपिइरहेछ | देविका तिमिल्सिना | पुरुष | कथा |
| ५ | ३ | एउटा सामाजिक कलंक<br>देउकी र देवदासी प्रथा | मनु ब्राजाकी | पुरुष | लेख |
| १० | ३६ | दाइजो, तिलक प्रथा र घरेलु हिंसा | नवराज बस्नेत | पुरुष | लेख |
| १० | ३६ | उठ्नुपर्छ अरु रजनी समेत | कृष्ण लामा | पुरुष | घटना विवरण |
| १० | ३७ | सिमरदही बोक्सी काण्ड | इन्सेक | | घटना विवरण सत्य तथ्य |
| १० | ४० | कनकपट्टी बेलौनी सामुहिक बलात्कार काण्ड | इन्सेक | | घटना विवरण सत्य तथ्य |
| १० | ४० | पतनुका बनरझुल्ला बोक्सी काण्ड र वास्तविकता | नवराज बस्नेत | पुरुष | घटना विवरण सत्य तथ्य |
| ५ | ४।५ | सरस्वतीको मृत्युले दिएको झट्का | इन्सेक | | घटनामूलक<br>आवरण लेख<br>सतहमा देखिएको कुरा |
| ५ | ६ | जहाँ महिलाको मताधिकार छैन | लेखनाथ भण्डारी | पुरुष | घटनामूलक लेख<br>घटना विवरण |
| ५ | २२ | अर्को उज्यालोको खोजीमा | देविका तिमिल्सिना | पुरुष | कथा |
| ८ | २९ | जीवनको अनुभूति नभएका उनीहरु | कमला पराजुली | महिला | लेख |
| ९ | ३०<br>दलित विशेषांक | डोम समुदाय र बालविवाह | कृष्ण लामा | पुरुष | लेख |
| ९ | ३० | जेलभित्र बलात्कृत मानवअधिकार | प्रकाश ज्वाला | पुरुष | घटनामूलक लेख<br>जेल अनुगमन विशेष |
| ११ | ४४ | बोक्सीको आरोपमा कुटपिट | दिपेन नेउपाने | पुरुष | घटना विवरण |
| ११ | ४२ | आमाको दुध खाँदा खाँदै विवाहको कुरा छिनियो | रमेशकुमार पौडेल | पुरुष | लेख |
| ११ | ४२ | खोइ कहाँ छ महिला अधिकार | अधिवक्ता विष्णुबहादुर खत्री | पुरुष | लेख |
| १२ | ४८ | नेपालमा मुस्लिम समुदायमा महिलाहरुको समस्या र समाधान | हमीद अन्सारी | पुरुष | लेख |
| | ४८ | गर्भपतनलाई कानूनी मान्यता सहुलियत वा अधिकार ? | विनोद नेपाल | पुरुष | लेख |
| | ४८ | नेपालमा महिला शिक्षा : एक चर्चा | भूवनेश्वर प्रधान | पुरुष | लेख |
| | ४८ | नेपाली महिलाहरुको स्वास्थ्य स्थिति संक्षिप्त विवेचना | अप्सरा पाण्डे | महिला | लेख |
| | ४८ | कथित बोक्सीको खोजी र शिकार<br>जागरणसगै कानून र कार्यान्वयन विना परिवर्तन असंभव | प्रेक्षा ओझा | महिला | लेख |
| | ४८ | चेलीबेटी बेचबिखन, असरहरु र राज्यको दायित्व | अच्युत अर्याल | पुरुष | लेख |
| | ४८ | सामाजिक कुसंस्कारको रुपमा रहेको छाउपडी प्रथा | खड्कराज जोशी | पुरुष | लेख |
| | ४८ | सीता किन फर्किनन् ? | डा. अरुणा उप्रेती | महिला | अनुभूति, संस्मरण |
| | ४८ | महिला अधिकार र सांस्कृतिक रुपान्तरण | अमर गिरी | पुरुष | लेख |
| | ४८ | ठूली | वालकृष्ण कट्टेल | पुरुष | कविता |
| | ४८ | एउटा यस्तो जीवन यात्रा | विमला ज्ञवाली | महिला | कथा |
| | ४९ | जाग्दैछन्- गाउँगाउँमा सञ्चारिका | कुन्दन अर्याल | पुरुष | फिचर लेख |

आफ्नो जति पनि कलम चलाएको त्यसमा सबैभन्दा बढी भाग नेपाली समाजको चिरफार गर्न, नेपाली समाजभित्र गुम्सिएर बसेका महिलाविरुद्ध भेदभाव, कुसंस्कार, हिंसा र अमानवीय व्यवहारका घटनाहरुलाई समाजसामू छर्लंग पार्न खर्च गरेको देखिन्छ। प्राचीका शुरुका वर्षहरुमा विशेषत: नेपाली समाजमा जरा गाडेर बसेका भेदभावपूर्ण, अमानवीय र महिलाको मानवअधिकारमा गम्भीर चोट पुऱ्याउने खालका विभिन्न प्रथाहरु, चलनहरु, संस्कारहरु र क्रियाकलापहरुको बारेमा स्थलगत रिपोर्टिङ, सर्भेक्षण प्रतिवेदन र लेखहरुमार्फत् प्रस्तुत गरिएको देखियो। जस्तै: प्राचीका ०४९/५० का अंकहरुमा मध्यपश्चिमको वादी प्रथाभित्रका महिलाहरुको पीडा, हुम्ला, जुम्ला लगायत् कर्णालीका जिल्लाहरुमा विद्यमान जारी प्रथा, सिन्धुपाल्चोक र नुवाकोटबाट भएका चेलिबेटी बेचबिखनका घटनाहरुलाई स्थलगत रिपोर्ट, घटनामा आधारित विश्लेषणात्मक लेखहरुका माध्यमबाट प्रष्ट पारिएको छ। यी विश्लेषणात्मक लेखहरुले नेपाली महिलाहरुको स्थितिको आंकलन गर्न, महिलाहरुले भोग्नुपरेका हिंसाहरुबारे सरलतापूर्वक विभिन्न घटना अध्ययनमार्फत् पाठकहरुलाई समस्याको गहिराइसम्म पुग्न मद्दत पुऱ्याएका छन्।

प्राचीमा ५ वटा जति लेखहरु चेलिबेटी बेचबिखनसँग सम्बन्धित छन्। बोक्सीको आरोपमा महिलामाथि गरिने दूर्व्यवहारसम्बन्धी लेख-रचनाहरु ३ वटा छन्। जारी प्रथा, छाउपडी प्रथा, वादी महिलाहरुका समस्या, बहुपति, बहुपत्नी प्रथा, बालविवाह, दाइजो, तिलक प्रथा र घरेलु हिंसासम्बन्धी लेख, घटना अध्ययनहरुसमेत समेटिएका छन्। साथै, महिलामाथिको भेदभाव, घरेलु हिंसा, सामाजिक हिंसा, महिलामाथि गरिने यौन दूर्व्यवहारका विषयहरु समेटिएका कथा, कविताहरुसमेत प्राचीका विभिन्न अंकमा समेटिएका छन्।

प्राचीमा महिलाविरुद्ध हिंसा, लैंगिक विभेदबारे सैद्धान्तिक ज्ञान दिने लेखहरु पनि छापिएका छन्। त्यसैगरी कतिपय रचनाहरु महिला अधिकार संरक्षणका लागि भएका विभिन्न अन्तर्राष्ट्रिय र राष्ट्रिय घटनाहरुबारे चर्चा गरेर छापिएका छन्।

**२. सशस्त्र द्वन्द्व र महिला**

नेपालमा ०५२ सालपछि शुरु भएको माओवादी "जनयुद्ध"पछि सशस्त्र द्वन्द्वले महिलाहरुमा पारेको असर, शान्तिका लागि महिलाहरुको भूमिकाजस्ता विषयमा पनि प्राचीमा कलम चलाएको पाइयो। यस्ता विषयका सम्बन्धमा प्राचीमा ५ वटा जति लेखहरु छापिएका छन्। यी लेखहरुमा जनयुद्धबाट महिलाहरुमा परेको प्रभाव र असरहरु केलाउनुका साथै शान्ति स्थापनाका लागि महिलाहरुको भूमिका के हुनसक्छ भन्नेसमेत चर्चा गरिएको छ।

**३. महिला सशक्तिकरण र उत्प्रेरणाका लागि प्रेरक प्रसंग**

प्राचीले महिला सशक्तिकरण र उत्प्रेरणाका लागि कुनै पनि क्षेत्रमा नेतृत्व गर्ने महिलाहरुका बारेमा जानकारी दिने, महिलाहरुले गरेका विशेष योगदान र साहसिक कार्यहरु उजागर गर्ने र उनीहरुबाट नेपाली महिलाहरुलाई उत्प्रेरणा जगाउने उद्देश्य राखेको देखिन्छ। प्राचीको दोस्रो अंकमा नै सन् १९९२ मा नोबेल पुरस्कारप्राप्त ग्वाटेमालाकी आदिवासी रेड इन्डियन रिगोबेर्ता मिन्चुबारे खोजमूलक लेखं प्रकाशन गरिएको छ। त्यसैगरी नेपालका विभिन्न आन्दोलनमा र विशेषगरी ०४६ सालको जनआन्दोलनमा शहादत प्राप्त गर्ने महिला शहीदहरुको बारेमा विस्तृत जानकारी दिँदै २२ औं अंकमा "नेपालको राजनीतिक आन्दोलनमा शहादत प्राप्त गर्ने महिलाहरु" प्रकाशन गरियो। संसारकै सर्वोच्च शिखर सगरमाथामा पाइला टेक्ने प्रथम महिला

विश्लेषणात्मक लेखहरूले नेपाली महिलाहरूको स्थितिको आँकलन गर्न, महिलाहरूले भोग्नुपरेका हिंसाहरूबारे सरलतापूर्वक विभिन्न घटना अध्ययनमार्फत् पाठकहरूलाई समस्याको गहिराइसम्म पुग्न मद्दत पुऱ्याएका छन्।



पासाङ ल्हामु शेर्पाबारे जानकारी दिँदै उनको साहसिक कदमबारे चर्चा गरेर २२ औं अंकमा नै अर्को लेख लेखिएको छ। विश्वका महान महिला नेतृहरु मार्था, साराह, अल्वर्टिना र डोरबारे प्रकाश पार्दै वर्ष ९ को ३२ औं अंकमा प्रकाशन गरिएको छ। गरिबी र महिलाविरुद्धका हिंसाविरुद्ध सञ्चालित महिलाहरुको विश्वयात्रा २००० बारे जानकारीमूलक लेख पनि अंक ३२ मा प्रकाशित गरिएको छ। यसैगरी राजनीतिमा प्रत्यक्ष संलग्न व्यक्ति र राजनीतिमा लागेर शहादत प्राप्त गर्ने शहीद परिवारका महिलाहरुको आवाजलाई ठाउँ दिएर वर्ष ४ को अंक १ मा "हामीले सोच्यौं देशका लागि, हाम्रो लागि कसले सोच्ने" शीर्षकमा आवरण लेख छापिएको छ। महोत्तरीमा निरन्तर महिलाहरुको मताधिकारका लागि अभियानरत वसन्ती देवीको बारेमा चर्चा गर्दै वर्ष ११, अंक ४३ मा आवरण लेख छापिएको छ।

यसरी उल्लेखित लेखहरुमध्ये २ वटा प्राचीको आवरण लेखका रुपमा छापिएका छन् भने अधिकांश प्रेरक प्रसंगका रुपमा छापिएका छन्। यसबाट के पुष्टि हुन्छ भने, प्राचीले साहसिक महिलाहरुका कथा र उनीहरुका अभियानबारे जानकारी दिएर नेपाली महिला आन्दोलनमा अगाडि बढाउन उत्साह प्रदान गरेको छ।

**प्राचीले महिला सशक्तिकरण र उत्प्रेरणाका लागि कुनै पनि क्षेत्रमा नेतृत्व गर्ने महिलाहरूका बारेमा जानकारी दिने, महिलाहरूले गरेका विशेष योगदान र साहसिक कार्यहरू उजागर गर्ने र उनीहरूबाट नेपाली महिलाहरूलाई उत्प्रेरणा जगाउने उद्देश्य राखेको देखिन्छ।**

### ४. कानुन र महिला

महिला अधिकार स्थापित गर्ने मूल स्रोतहरु भनेका कानुनहरु र राज्यले निर्माण गर्ने नीति तथा संयन्त्रहरु हुन्। नेपालमा लिंगका आधारमा महिला र पुरुषमा समानता र समता स्थापित गर्न सर्वप्रथम कानुनहरु नै



समतामा आधारित हुनु जरुरी छ। यसतर्फ नेपालले अन्तर्राष्ट्रिय तहमा प्रतिबद्धता जनाएर एक कदम अगाडि बढेता पनि व्यवहारिकरुपमा राष्ट्रिय कानुनहरु संशोधन गर्न भने निकै अन्कनाएको स्थिति छ। यही तथ्यलाई ध्यान दिएर होला, प्राचीका विभिन्न अंकमा गरी ५ वटा भन्दा बढी लेखहरुले मूलुकी ऐन संशोधनको आवश्यकता, घरेलु हिंसाविरुद्ध कानुनको आवश्यकता, चेलिबेटी बेचबिखनविरुद्ध प्रभावकारी कानुनको लागि संशोधनको आवश्यकता, बोक्सी, दाइजो, घरेलु हिंसा जस्ता विषयलाई कानुनी दायरामा समेट्नका लागि सुझाव दिएर कलम चलाएको पाइयो।

मुलुकी ऐनको ११ औं संशोधनपछि त्यसलाई समीक्षा गर्दै २ वटा लेख लेखिएका छन्। यसबाट के पुष्टि हुन्छ भने प्राचीले समानतामा आधारित समाज निर्माणका लागि

**प्राचीका १ देखि ४९ अंकमा प्रकाशित महिला र कानूनसम्बन्धी लेख रचनाहरूको सूची**

| वर्ष | अंक | शीर्षक | लेखकको नाम | लेखक/लेखिका | रचनाको प्रकार |
|---|---|---|---|---|---|
| ९ | ३३ | मानव अधिकार र पैतृक सम्पत्तिमा महिलाहरुको अधिकार<br>सन्दर्भ मुलुकी ऐन (एघारौं संशोधन) विधेयक २०५६ | नवराज बस्नेत | पुरुष | लेख |
| ११ | ४२ | महिलाको दृष्टिकोणमा अन्तराष्ट्रिय फौज्दारी अदालत | रञ्जना थापा | महिला | लेख |
| ११ | ४२ | महिलाको सम्पत्तिसम्बन्धी अधिकार र कानूनी व्यवस्था | निर्मला महत | महिला | लेख |
| १२ | ४८ | समान हुनका लागि समान आर्थिक अधिकार | सुबोधराज प्याकुरेल | पुरुष | लेख |
| १२ | ४८ | मुलुकी ऐन एघारौं सशोधन, विभेदपूर्ण कानून र सुधारका सवालहरु | अधिवक्ता मीरा ढुंगाना | महिला | लेख |
| १२ | ४८ | गर्भपतनलाई कानूनी मान्यता सहुलियत वा अधिकार ? | विनोद नेपाल | पुरुष | लेख |
| १२ | ४८ | महिला विरुद्ध हुने सबै प्रकारका भेदभाव उन्मूलनसम्बन्धी महासन्धि र नेपाल | रञ्जना थापा | महिला | लेख |



कानुनहरुले महत्वपूर्ण भूमिका खेल्न सक्छन् भन्ने महसुस गरेर कानुनी समानताका लागि निरन्तर आफ्नो प्रयास जारी राखेको छ।

**५. महिला अधिकारका लागि संस्थागत प्रयास र स्थायित्व**

प्राचीले नेपालमा अधिकारसम्पन्न महिला आयोग आवश्यक छ भनेर वकालत गर्दै आएको कुरा यसका लेखरचनाको अध्ययनबाट पुष्टि हुन्छ। महिला आयोग निर्माण भए लगत्तै महिला आयोगको अधिकार क्षेत्रबारे चिन्ता जाहेर गर्दै लेख लेखिएको पाइयो भने त्यसलाई संस्थागत र अधिकारसम्पन्न बनाउन आएका विचारहरु समेत समेटिएको र २ पटक महिला आयोगका अध्यक्षको अन्तरवार्ता प्रकाशित गरेको पाइयो।

नेपालमा महिलाहरुको आवाज संगठित गर्ने दह्रो संयन्त्र आवश्यक छ र सो संयन्त्र अधिकार र शक्तिसम्पन्न हुनुपर्छ भन्नेतर्फ प्राचीले वकालत गरेको देखिन्छ।

**प्राचीमा महिलासम्बन्धी रचनाहरु कुन-कुन विधाका छन् ?**

प्राचीमा महिला विषयक रचनाहरुलाई विधागतरुपमा छुट्याउँदा लेखहरुको संख्या धेरै छ। स्थलगत रिपोर्टहरु पनि प्रशस्तमात्रामा देखिन्छन्। कथाहरुको संख्या केवल ७ वटा रहेका भेटिए भने कविता ४ वटा प्रकाशित भएका छन्। शुरुका दिनहरुमा प्रेरक प्रसंगका रुपमा महिलाहरुले गरेका विशिष्ट कार्यहरुलाई केन्द्रमा राखेर लेखिएका रहेछन् भने पछि आएर विश्लेषणात्मक लेखहरु, कुनै पनि विषयको विवरणात्मक लेखहरु र कतिपय अंकमा आवरण लेखका रुपमा पनि महिलाका विषयहरुले स्थान पाएका छन्। कतिपय लेखहरु घटना विवरण (केस स्टडी) हरु सहितका विश्लेषणात्मक छन् भने पासाङ ल्हामु शेर्पा, योगमाया न्यौपाने, सोनाम छेजुङ, मिन्चुका सफलताका कथा र जीवनीसहितका लेखहरुसमेत नसमेटिएका होइनन्। प्राचीमा महिलासँग लिइएका ३ वटा अन्तरवार्ता पनि छापिएका छन्। तीमध्ये २ वटा अन्तर्वार्ता राष्ट्रिय महिला आयोगका निवर्तमान अध्यक्ष डा. दुर्गा पोखरेलसँग लिइएका छन् भने एउटा समाज कल्याण परिषदका तत्कालीन कोषाध्यक्ष प्रतिभा सुवेदीसँग लिइएको छ। बीच-बीचमा फाट्टफुट्ट व्यक्तिहरुका विचारहरु लिइएका लेखहरु पनि ३ वटा जति छन्। अडियो क्यासेट समीक्षाका रुपमा रामेशको आधा शक्ति पुरुष, आधा शक्ति नारी अडियो क्यासेटको समीक्षा कुन्दन अर्यालले वर्ष १ को अंक ६ मा गर्नुभएको छ भने वर्ष १२ को पूर्णांक ४८ मा बालकृष्ण कट्टेलले दक्षिण एसियामा महिला तथा बालबालिका बेचबिखनसम्बन्धी पुस्तक समीक्षा गर्नुभएको छ। निबन्ध एक्लो परेको छ, यो पनि लक्ष्मीप्रसाद देवकोटाको नारी निबन्ध साहित्य विशेषांकमा प्रकाशित भएको छ। अनुभूति विधा पनि एक्लो परेको छ, वर्ष १२ को पूर्णांक ४८ मा डा. अरुणा उप्रेतीको सीता किन फर्किनन् ? शिर्षकमा।

यसरी प्राचीले विचारप्रधान पत्रिकाका रुपमा प्रकाशित भएर होला, साहित्यिक विविधताभन्दा बढी विषयवस्तुगत विविधतातिर ध्यान दिएको देखिन्छ। पाठकहरुलाई रुची दिनका लागि कथा, कविता, चुट्किला आदितिर भने कमै आकर्षित भएको पाइन्छ।

**प्राचीमा महिला अधिकारबारे लेख्ने रचनाकारहरुमा महिला-पुरुष**

प्राचीमा जम्मा ७७ वटा लेख-रचनाहरु महिलाका सवालसँग सम्बन्धित रहेका पाइए। यसमध्ये ३२ वटा रचनाहरु महिलाहरुद्वारा लेखिएका पाइए भने




**महिला अधिकार स्थापित गर्ने मूल स्रोत भनेका कानुनहरू र राज्यले निर्माण गर्ने नीति तथा संयन्त्रहरू हुन्। नेपालमा लिंगका आधारमा महिला र पुरुषमा समानता र समता स्थापित गर्न सर्वप्रथम कानुनहरू नै समतामा आधारित हुनु जरुरी छ। यसतर्फ नेपालले अन्तर्राष्ट्रिय तहमा प्रतिबद्धता जनाएर एक कदम अगाडि बढेता पनि व्यवहारिकरूपमा राष्ट्रिय कानुनहरू संशोधन गर्न भने निकै अन्कनाएको स्थिति छ।**

**काठमाडौंको मैतीदेवीमा भएको सरस्वती अधिकारीको बोक्सी बकाउने निउँमा गरिएको चरम यातना र हत्याको घटनालाई प्राचीले आवरण लेखका रूपमा महत्व दिएर छापेको छ भने सिमरदहीमा भएको मरनीदेवी बोक्सीकाण्ड, पतनुका बनरभुल्ला बोक्सीकाण्डलाई घटना विवरणसाथ प्रस्तुत गरिएको छ।**




४५ वटा रचनाहरु पुरुषहरुद्वारा। यसरी हेर्दा महिला अधिकारको सवाल केवल महिलाको मात्र सरोकारको विषय होइन, यो आम सरोकारको विषय हो भन्ने कुरामा प्राची सम्पादनमण्डल प्रष्ट देखिन्छ। महिलाविरुद्ध हिंसाका विभिन्न स्वरुपलाई स्थलगत रिपोर्टका रुपमा पाठकसमक्ष ल्याउने, समसामायिक सवाललाई लेख, अन्तरवार्ताका रुपमा पाठकको ध्यानाकर्षण गर्ने, सैद्धान्तिक तथा नीतिगत विषयहरुमा जानकारीमूलक लेखहरु प्रकाशित गर्नेमा महिला तथा पुरुष दुवैलाई उपयोग गरिएको देखिन्छ। तर पनि महिला अधिकारका सवालहरु, उनीहरुका पीडाहरु र यथार्थ भोगाइहरुलाई प्रस्तुत गर्न सक्षम महिला लेखकहरु, विश्लेषकहरुलाई प्राचीमा लेख्न प्रोत्साहन दिनु, नयाँ-नयाँ प्रतिभाहरुलाई पनि लेख्ने अवसर र प्रोत्साहन दिनुपर्ने आवश्यकता भने यस विश्लेषणबाट बोध भएको छ। महिला अधिकारलगायत् विविध क्षेत्रमा महिलाहरुलाई लेख्न प्रेरित गर्नतर्फ भने प्राचीले सोच्नैपर्ने देखिन्छ। प्राचीमा शुरुका वर्षहरुमा त फाट्टफुट्टरुपमा महिलाहरुले लेखेको पाइन्छ र सो पनि विशेष गरी महिला अधिकारका सवालमा मात्र। पछि आएर विस्तारै महिलाहरुले अन्य क्षेत्रमा पनि कलम चलाएका भएता पनि तुलनात्मकरुपमा महिलाहरुको लेख-रचना ज्यादै कम देखिन्छन्। यसैले प्रत्येक अंकमा महिलाहरुलाई पनि लेखनमा अवसर दिने, उनीहरुका लेख-रचनालाई स्थान दिने र लेख्न प्रोत्साहन गर्नेतर्फ प्राचीले सोच्नै पर्नेछ। नेपाल विविध धर्म, संस्कृति र भाषाभाषीहरुको देश भएकाले प्राचीमा सो विविधतालाई पनि सकेसम्म समेट्दा राम्रो हुन्छ।

**प्राचीमा महिला अधिकारका विषयले पाएको प्राथमिकता**

प्राचीले आफ्नो शुरुवातदेखि नै महिला अधिकारको विषयलाई समेट्दै आएको छ। यो सराहनीय पक्ष हो। प्राचीका धेरैजसो अंकमा एउटा लेख, रचना महिला अधिकारसँग सम्बन्धित रहेको पाइयो भने महिला अधिकार विषयलाई छुटाएर पनि थुप्रै अंकहरु छापिएका छन्। विषयगत विविधता र पाठकहरुलाई सर्वपक्षीय ज्ञान दिनका लागि तथा महिलाका सवाललाई मूलप्रवाहमा ल्याउन यस विषयमा निरन्तररुपमा ज्ञान दिने लेख-रचना छाप्नु आवश्यक छ। अरु मासिक र द्वैमासिक पत्रिकाहरुको तुलनामा प्राचीले महिलाका विषयलाई दिएको प्राथमिकता निश्चय नै धेरै माथि छ। तर, पाठकहरुले प्राचीबाट मानवअधिकार र सामाजिक न्यायका सवालमा बढी नै अपेक्षा गरेका हुन्छन् र त्यसलाई पूरा गर्नु पनि पर्दछ।

**प्राचीले उठाएका महिला अधिकारका सवालमा राष्ट्रिय चासो र सफलता**

प्राचीले आफ्नो शुरुका अंकहरुमा चेलिबेटी बेचबिखन, जारी प्रथा, वादी महिलाहरुको समस्या, कर्णाली क्षेत्रका महिलाहरुले भोग्नु परेका बहुविवाह, बहुपति जस्ता पीडाहरु, देहव्यापारका लागि हुने महिला बेचबिखनका सवालहरुलाई जोडदाररुपमा उठाएको पाइन्छ। डोटी, अछाम, हुम्ला, रोल्पा, सिन्धुपाल्चोक, नुवाकोट जिल्लाहरुमा स्थलगत अध्ययन गरी तिनका प्रतिवेदनहरुसमेत हृदय विदारक घटना विवरणसहित प्रस्तुत गरिएका छन्। यी विषयहरु आजसम्म पनि राष्ट्रिय चासोका विषय बनेका छन्। काठमाडौंको मैतीदेवीमा भएको सरस्वती अधिकारीको बोक्सी बकाउने निउँमा गरिएको चरम यातना र हत्याको घटनालाई प्राचीले आवरण लेखका रुपमा नै महत्व दिएर छापेको छ भने सिमरदहीमा भएको मरनीदेवी बोक्सीकाण्ड, पतनुका बनरभुल्ला बोक्सीकाण्डलाई घटना विवरणसाथ प्रस्तुत गरिएको छ। साथै, यस सम्बन्धमा समय-समयमा वैचारिक लेखहरुसमेत प्रकाशित गरिएको छ। जसले गर्दा, बोक्सीका नाममा महिलामाथि गरिने यातनाबारे श्री ५ को सरकारले एउटा सूचना भए पनि जारी गऱ्यो र हाल यसप्रति राष्ट्रिय चासो जागेको छ। यसैगरी प्राचीले सुदुरपश्चिममा रहेको छाउपडी प्रथा, तराईमा विद्यमान दाइजो, तिलक, बालविवाह, कमैया प्रथाभित्र महिला जस्ता समस्यालाई सार्वजनिक गर्ने र आम पाठकहरुलाई समस्याप्रति गंभीर हुन प्रेरित गरेको छ। साथै, प्राचीले वर्ष १०, अंक ४० मा सामुहिक बलात्कार, वर्ष ९, अंक ३० मा जेलभित्रका महिलाहरुका समस्याहरु, वर्ष ५, अंक २२ मा सामाजिक संघसंस्थामा कार्यरत महिलाहरुले भोग्नु

परेका यौनजन्य हिंसाका घटनालाई लेख तथा कथाका माध्यमबाट उजागर गरेको छ। प्राचीले नै पहिलो पटक महोत्तरीको गैडाभेटपुर र पसदिवाड गाविसमा महिलाको मताधिकार नभएको कुरालाई प्राथमिकताका साथ आवरण पृष्ठमा छापेको थियो, यसलाई अन्य सञ्चार जगतले पनि प्राथमिकता दिएका थिए। प्राचीले कुनै कुरालाई उठाउने मात्र नभई बारम्बार फलोअप पनि गरेको देखिन्छ। शुरुमा मरनीदेवीको घटनालाई सार्वजनिक गर्‍यो, महोत्तरीमा महिलाको मताधिकार नभएको विषयलाई सार्वजनिक गर्‍यो भने मरनीदेवी र बसन्तीदेवी झालाई चिनाउने गरी पुन: लेखेर फलोअप गरेको छ। पैत्रिक सम्पत्तिमा समान अधिकारका लागि शुरुका लेखहरु केन्द्रित गरिएका थिए भने मुलुकी ऐनको एघारौ संशोधनपछि त्यसको उपलब्धी र कमीकमजोरीलाई समीक्षा गर्दै फलोअप लेखहरु प्रकाशित गर्दै आएको छ। शुरुका दिनमा महिला आयोगको आवश्यकता, बन्द अदालतको आवश्यकता, स्थानीय तहमा महिलाहरुको सहभागिताको आवश्यकताबारे लेखहरु केन्द्रित देखिन्छन् भने महिला आयोग गठनपछि त्यसको संवैधानिक हैसियत, अधिकार क्षेत्र मजबुत गर्ने, स्थानीय तहमा महिलाहरुको सहभागिता बृद्धि भएपछि तिनलाई क्षमतावान बनाउनेतर्फ आफ्ना लेख, रचनाहरु केन्द्रित गरेको देखिन्छ।

पछिल्ला दिनहरुमा प्राचीले देशमा बढ्दै गएको हिंसात्मक संघर्षले महिला तथा बालबालिकामा पारेको असर, शान्तिका लागि महिलाको भूमिका आदितर्फ आफ्नो ध्यान केन्द्रित गरेको छ।

**प्राचीको पूर्णाङ्क ४८ : महिला विशेषांक**

प्राचीको पूर्णांक ४८ महिला विशेषांकका रुपमा प्रकाशित भएको छ। यसले महिलाहरुका बहुपक्षीय सवालहरु, श्री ५ को सरकारको नीति, शिक्षा, स्वास्थ्य, हालको हिंसात्मक द्वन्द्वले महिलामा पारेको असर, चेलिबेटी बेचबिखन, छाउपडी प्रथा, बोक्सीको नाममा महिलामाथि हुने हिंसा, मुलुकी ऐनको एघारौं संशोधन, मुस्लिम समुदायका महिलाहरुको समस्या, सिड र नेपालको प्रतिबद्धता, विकासको मूल प्रवाहमा महिलाको अर्थपूर्ण सहभागिताको सवाल, सञ्चारमा महिला, राजनीतिमा महिला सहभागिताका लागि संभावना र चुनौतीहरु, शान्ति स्थापनामा महिला, समान हुनका लागि आर्थिक अधिकार, एकादेशकी राजकुमारीलगायत्का लेख-रचनाहरु समेटिएका छन्। यो अंक महिला अधिकार र समविकासमा चासो राख्नेहरुका लागि संग्रहणीय अंकका रुपमा रहेको छ। यसले हालका समसामयिक सवालहरुप्रति स्पष्ट पार्न र विषयवस्तुमा ज्ञान दिन र आवश्यक तथ्यांकहरुसमेत थाहा पाउन निकै मद्दत पुर्‍याउँछ।

**प्राचीले आगामी दिनमा सोच्नुपर्ने क्षेत्रहरु**

प्राचीले द्वैमासिक पत्रिकाका रुपमा मानवअधिकार र सामाजिक न्यायका विषयमा विभिन्न ढंगले आम पाठकहरुलाई सुसूचित गर्ने, जानकारी गराउने र वैचारिक खुराक दिने गर्दै आएको छ। यसतर्फ आगामी दिनमा अझै परिस्कृत भएर विषयगत विशेषांकहरु निकाल्ने, विभिन्न धर्म, संस्कृति, वर्ग र पेशालाई समेटेर लेख, रचनाहरु प्रकाशन गर्ने, लेखकहरुमा दलित, महिला, विभिन्न समुदाय र दुर्गम क्षेत्रकालाई पनि समेटेर अगाडि बढ्दा अझ बढी निखार आउनसक्छ। शुरुका दिनमा प्राथमिकता दिएजस्तो स्थलगत प्रतिवेदनहरु, स्थानीय तहका आवाजहरुलाई प्राचीमा उठाउनु जरुरी छ। प्रेरक प्रसंगहरु, महत्वपूर्ण निर्णय, घटनाहरुलाई समेट्न सकेमा प्राचीलाई संग्रहणीय बनाउन मद्दत पुग्छ। प्राचीका प्रत्येक अंक कुनै न कुनै विशेषांकका रुपमा निकाल्न सकेमा सामाजिकरुपमा पाखा लगाइएको समुदायका विषयवस्तुहरु पनि केन्द्रमा ल्याउन मद्दत पुग्दछ र पाठकहरुले अझै महत्व दिने छन्। सम्पादनका लागि एउटा समूह बनाएर महिला, दलित र अल्पसंख्यकहरुको समेत सहभागिता भएमा विषयहरु समेट्न मद्दत पुग्दछ।

अन्त्यमा, तर सबैभन्दा महत्वपूर्ण, प्राची आफ्नो स्वर्ण अङ्क मनाउन सफल भएकोमा हार्दिक बधाइसहित अझै समुन्नतिको शुभकामना।




प्राचीका प्रत्येक अंक कुनै न कुनै विशेषांकका रुपमा निकाल्न सकेमा सामाजिकरुपमा पाखा लगाइएको समुदायका विषयवस्तुहरु पनि केन्द्रमा ल्याउन मद्दत पुग्दछ। सम्पादनका लागि एउटा समूह बनाएर महिला, दलित र अल्पसंख्यकहरुको समेत सहभागिता भएमा विषयहरु समेट्न मद्दत पुग्दछ।

# प्राची र बालबालिकाको सवाल

– जगदीश दाहाल




**देशमा चलिरहेको आन्तरिक सशस्त्र द्वन्द्वमा बालबालिकाको प्रयोग भइरहेको छ भन्ने चर्चाले एउटा प्रश्नचिन्ह खडा गरेको स्थिति छ भने अर्कोतिर नेपालबाट बेचिने चेलिबेटीहरूमध्ये २० प्रतिशत बालिका रहेको तथ्यांक प्रकाशमा आएको छ। जसले गर्दा बालवेश्यावृत्ति फस्टाइरहेको छ। यस परिस्थितिबाट बालबालिकाको संरक्षणमा ऐच्छिक सन्धिपत्रहरूको अत्यन्त्यै महत्व रहेको छ।**

इन्सेक आफ्नो स्थापनाकालदेखि नै अलाभान्वित समुदायका जनताको अधिकार सम्बर्द्धन र संरक्षण गर्ने कार्यमा संलग्न हुँदै आएको छ। यसक्रममा संस्थाले बालबालिका, महिला, बँधुवा मजदुरको रुपमा रहेका पूर्व कमैया, कृषि मजदुर, दलित तथा पीडित समुदायको अधिकार रक्षाको लागि सक्रिय भूमिका निर्वाह गरेको छ। संस्थाले मानवअधिकारको संरक्षण र सम्बर्द्धनको लागि राष्ट्रियस्तरमा मानवअधिकार स्थितिको अनुगमन, प्रलेख र सम्प्रेषण गर्नुका साथै अन्तर्राष्ट्रिय मानवअधिकार सन्धि र कानुनहरुको अनुगमन गर्दै आइरहेको छ। इन्सेकले प्रमुखरुपमा सचेतनता अभिबृद्धि गर्ने, मानवअधिकारका सवाललाई उजागर गर्ने र नीतिनिर्माणमा प्रभाव पार्ने काम गर्दै आइरहेको छ। उक्त कार्यहरुको प्रभावकारिताको लागि प्रकाशनको महत्वपूर्ण भूमिका रहँदै आएको छ। इन्सेकले विभिन्न प्रकाशनहरुको सँगसँगै प्राची द्वैमासिकको प्रकाशनमार्फत् देशका मानवअधिकार संस्कृतिको निर्माणमा जोड दिँदै आइरहेको छ।

प्राचीमा विगतमा समेटिएका विभिन्न सवालहरुसँगसँगै बालअधिकारको सवाललाई पनि उठाईदै आएको पाइन्छ। विगतमा तिनै बालवालिकाका सम्बन्धमा उठान गरिएका विभिन्न लेख, रचना, अन्तरवार्ता र अन्य सामग्रीहरुको संक्षिप्त समीक्षा यस लेखमा गर्न खोजिएको छ।

प्राचीका विभिन्न अंकहरुलाई सरसर्ति हेर्दा इन्सेकले प्राचीको नियमित प्रकाशन ०४९ सालदेखि भएको पाइन्छ। प्राचीमा उठाइएका बालबालिकाका सवाललाई इन्सेकले विद्यालयमा शुरुवात गरेको बालबालिकासम्बन्धी कार्यक्रमसँग पनि दाँजेर हेर्न सकिन्छ। जब संस्थाको कार्यक्रम र कुनै निश्चित सवालमा शुरुवात हुन्छन् तब संस्थाका अन्य गतिविधिहरुमा पनि उक्त सवालले स्थान पाउने कुरा यसले इंगित गरेको पाइन्छ।

**प्राचीका विभिन्न अंकमा बालबालिकाको सवाल**

वर्ष १, अंक १, ०४९ कार्तिक/मंसिरको अंकमा तारक धितालको तथ्यको कसीमा हाम्रा केटाकेटीहरुको बालअधिकार शीर्षकको लेखबाट प्राचीमा बालबालिकासम्बन्धी सवालले प्रवेश पाएको देखिन्छ। उक्त लेखमा नेपालमा बालश्रमिकहरुको अवस्थाबारे चर्चा गरिएको छ। उहाँले लेखमा भरिया, इँटाभट्टा, ढुङ्गाखानी, चिया बगान, गलैँचा बुनाइदेखि सडक बजारमा फोहोर खोतली प्लाष्टिक टिप्नेलगायत्का विविध क्षेत्रमा बालबालिकाको संलग्नताबारे चर्चा गर्नुभएको छ।

वर्ष ५, अंक २, ०५३ कार्तिक/मंसिरको अंकमा शैक्षिक अधिकारमा वाधा–विपन्नता भन्ने कविता अर्यालको लेखदेखि प्राचीमा बालबालिकासम्बन्धी सवालले नियमित स्थान पाएको देखिन्छ। उक्त लेखमा विभिन्न अन्तर्राष्ट्रिय प्रतिबद्धतामार्फत् राज्यले बालबालिकालाई प्राथमिक शिक्षा अनिवार्य र नि:शुल्क प्रदान गर्नुपर्ने तर



व्यवहारिकरुपमा सरकारले विद्यालय शिक्षा नि:शुल्क भनेता पनि विभिन्न नामले लिइने शुल्कहरुले गर्दा उनीहरुलाई शिक्षा आर्जनमा हतोत्साहित गरिएको कुरा उल्लेख गरिएको छ। उक्त लेखमा विशेष गरी इन्सेकद्वारा आयोजित मध्य तथा सुदुरपश्चिमका सरकारी विद्यालयका शिक्षक गोष्ठीका सहभागीहरुको भनाईलाई उद्धृत गर्दै राज्यले गरेको अन्तर्राष्ट्रिय प्रतिबद्धता र राष्ट्रिय नीति तथा व्यवहारिक स्थितिका सम्बन्धमा छोटो चर्चा गरिएको छ। लेखमा बालबालिकाको शैक्षिक स्थितिसम्बन्धी तथ्य-तथ्यांकलाई समेत देखाइएको भए लेखले अझ बढी महत्व झल्काउने थियो। तसर्थ, आगामी दिनमा लेखिने यस किसिमका लेखमा त्यस पक्षलाई पनि ध्यान दिई सम्बन्धित सवाललाई तथ्यपरक बनाउनेतर्फ जोड दिनुपर्ने देखिन्छ।

वर्ष ५, अंक ४/५, ०५३ फागुन ०५४ वैशाखको अंकमा ग्रामीण इलाकामा बालअधिकारको सवाल सम्बन्धमा प्रकाश ज्वालाले ग्रामीण बालबालिकाहरु जाति, भाषा, धर्म, संस्कतिका आधारमा आफ्नो अधिकारबाट वञ्चित भएको कुरालाई व्यवहारिकरुपमा प्रस्तुत गर्नुभएको छ। उक्त लेखमा ग्रामीण इलाकाका बालबालिकाहरु आधारभूत शिक्षा र स्वास्थ्यको सुविधाबाट वञ्चित हुनु परेको, अन्धविश्वास र कुप्रचलनका आधारमा बालिकाहरु आफ्ना



अधिकारबाट वञ्चित भइरहेको तथ्य उजागर गरिएको छ। लेखकले उक्त लेखमा बालबालिकासम्बन्धी राष्ट्रिय तथा अन्तर्राष्ट्रिय कानुनी प्रावधान र त्यसको कार्यान्वयनको सवालदेखि लिएर ग्रामीण बालबालिकाको अवस्थालाई खोतल्ने प्रयत्न गर्नुभएको पाइन्छ।

सोही अंकमा बालश्रमविरुद्ध सामाजिक परिचालन सम्बन्धमा कृष्णप्रसाद उपाध्यायले सन् १९९७ मा नर्वेको ओस्लोमा भएको बालश्रमसम्बन्धी अन्तर्राष्ट्रिय सम्मेलनमा सहभागीता भएको हैसियतले त्यहाँ प्राप्त अनुभवका आधारमा सामाजिक परिचालनका सम्बन्धमा आफ्ना धारणाहरु प्रस्तुत गर्नुभएको पाइन्छ।

वर्ष ६, पूर्णाङ्क २४, ०५५ भदौको अंकमा वास्तवमै बालबालिका हाम्रा गुरु हुँदारहेछन् भन्ने लेखमा लेखिका कविता अर्यालले सन् १९९८ मा बालश्रम विरुद्धको ६ महिने विश्वयात्राका क्रममा एक-अर्को देश र भाषाका बालबालिकाहरुमाझ स्थापित सुमधुर र आत्मीय सम्बन्धलाई उजागर गर्दै उनीहरुबाट अरुले सिक्न सकिने धेरै कुराहरु रहेको अनुभव उल्लेख गर्नुभएको छ।

वर्ष ६, पूर्णाङ्क २६, ०५६ साउनको अंकमा के यी बाल अपराधका घटना होइनन् ? भन्ने रिपोर्टमा आत्माराम शर्माद्वारा आमनिर्वाचनको बखत मतदानमा गरिएको बालबालिकाको प्रयोगलाई उल्लेख गरिएको छ। उक्त रिपोर्टमा बालबालिकाविरुद्ध बालबालिकाकै प्रयोग गरी भएका अपराध र निर्वाचनहरुमा विभिन्न ढंगले बालबालिकाको प्रयोग गरी राजनीतिक दलहरुले बाल अपराध गरेको कुरा उल्लेख गरिएको छ। रिपोर्टमा ससाना बालबालिकाहरुले मतदान गरिरहेको तस्वीर र त्यस सम्बन्धमा रहेको राजनीतिक दलको अपराधिक मानसिकताका साथै त्यस्ता क्रियाकलापमा निर्वाचन आयोग तथा पुलिस प्रशासनको लाचारीपनलाई सचित्र प्रष्ट्याउन खोजिएको छ।

वर्ष ७, पूर्णाङ्क २७, ०५६ मंसिरको अंकमा बालअधिकार महासन्धिको एक दशक र कमैया बालबालिका शीर्षकमा सूर्यप्रकाश भट्टराईद्वारा लिखित एक लेख प्रकाशित गरिएको छ। उक्त लेखमा संयुक्त राष्ट्रसंघबाट बालअधिकार महासन्धि जारी भएको एक

**ग्रामीण इलाकाका बालबालिकाहरू आधारभूत शिक्षा र स्वास्थ्यको सुविधाबाट वञ्चित हुनु परेको, अन्धविश्वास र कुप्रचलनका आधारमा बालिकाहरू आफ्ना अधिकारबाट वञ्चित भइरहेको तथ्य उजागर गरिएको छ।**

बाल मजदुरको रूपमा रहेका कमैया बालबालिकाले बाबुले पाउने मसेउरा (मजदुरी) मा नै विना पारिश्रमिक काम गर्न वाध्य हुन्छन्। उनीहरू शिक्षा आर्जन गर्ने अवसरबाट वञ्चित भइरहेका र वाध्यकारी श्रममा संलग्न भइरहेको कुरा लेखमा उल्लेख गरिएको छ।



दशक पूरा भएको अवसरमा नेपालमा यसको कार्यान्वयनको स्थितिलाई छर्लङ्ग्याउने प्रयत्न गरिएको छ।

लेखमा नेपालले बालबालिका सम्बन्धी विभिन्न अन्तर्राष्ट्रिय कानुन र प्रावधानहरुमा पक्ष राष्ट्र भएको तथा अन्य विभिन्न प्रतिबद्धताहरु जनाइएको र राष्ट्रियस्तरमा पनि संविधान र कानुनमा बालबालिकाको पक्षमा कानुन र केही संयन्त्रको व्यवस्था गरिएता पनि ठूलो संख्यामा बालबालिकाहरु बालश्रम शोषणमा रहेका तथा त्यसमध्ये पनि उल्लेख्य संख्यामा बाल बँधुवा मजदुरको रुपमा रहेको कुरा उल्लेख गरिएको छ।

लेखमा कमैया बालबालिकाहरुको अवस्थाको बारेमा झल्काइएको छ। उनीहरु बँधुवा बालमजदुरको रुपमा रहेको कुरालाई मार्मिक ढंगले उजागर गरिएको छ। त्यसरी बँधुवा बाल मजदुरको रुपमा रहेका कमैया बालबालिकाहरुले बाबुले पाउने मसेउरा (मजदुरी) मा नै विना पारिश्रमिक काम गर्न वाध्य हुन्छन्। उनीहरु शिक्षा आर्जन गर्ने अवसरबाट वञ्चित भइरहेका र वाध्यकारी श्रममा संलग्न भइरहेको कुरा लेखमा उल्लेख गरिएको छ। उक्त लेखमा कमैया बालबालिकाहरुको पोषण, खोप, स्वास्थ्य उपचारको अभाव आदि कारणले अकालमै ठूलो संख्यामा मृत्यु भइरहेको कुरा उल्लेख गरिएको छ।

वर्ष ९, पूर्णाङ्क ३३, ०५७ माघको अंकमा बालअधिकारसम्बन्धी महासन्धिका थप ऐच्छिक सन्धिपत्रहरुको बारेमा तारक धितालले चर्चा गर्नुभएको छ। उक्त लेखमा बालअधिकार महासन्धि जारी भएको एक दशकपछि संयुक्त राष्ट्रसंघले त्यसैसँग सम्बन्धित रहेर दुइवटा सन्धिपत्रको निर्माण गरेको विषयवस्तुलाई उल्लेख गरिएको छ। २५ मे २००० मा महासभाबाट पारित बालबालिकाको सशस्त्र संघर्षमा संलग्नतासम्बन्धी ऐच्छिक सन्धिपत्र र बालबालिकाको बेचबिखन, बाल वेश्यावृत्ति र बालबालिकाको अश्लिल चित्रणसम्बन्धी ऐच्छिक सन्धिपत्रहरुले बालबालिकाको संरक्षणमा महत्वपूर्ण भूमिका खेल्ने अपेक्षा गरिएको छ। नेपालले सेप्टेम्बर २००० मा नै उक्त सन्धिपत्रहरुमा हस्ताक्षर गरेता पनि हालसम्म अनुमोदन गरिएको छैन।

नेपालको परिप्रक्ष्यमा हेर्दा दुवै ऐच्छिक सन्धिपत्रहरु बालबालिकाको संरक्षणमा सान्दर्भिक रहेका छन्। एकातिर हाल देशमा चलिरहेको आन्तरिक सशस्त्र द्वन्द्वमा बालबालिकाको प्रयोग भइरहेको छ भन्ने चर्चाले एउटा प्रश्नचिन्ह खडा गरेको स्थिति छ भने अर्कोतिर नेपालबाट बेचिने चेलिबेटीहरुमध्ये २० प्रतिशत बालिका रहेको तथ्यांक प्रकाशमा आएको छ। जसले गर्दा बालवेश्यावृत्ति फस्टाइरहेको छ। यस परिस्थितिबाट बालबालिकाको संरक्षणमा यी ऐच्छिक सन्धिपत्रहरुको अत्यन्त्यै महत्व रहेको छ।

वर्ष ११, पूर्णाङ्क ४१, ०५९ जेठको अंकमा कविता अर्यालको संकटकालले बालबालिकामा पारेको असरसम्बन्धी लेख छापिएको छ। उक्त लेखमा मुलुकमा आन्तरिक सशस्त्र द्वन्द्व र त्यसको समाधानको दौरानमा लगाइएको संकटकालले बालबालिकामा पारेको असरलाई औंल्याइएको छ। लेखमा द्वन्द्वरत दुवै पक्षले जेनेभा महासन्धिलगायत् बालबालिकासम्बन्धी अन्य ऐन/कानुनहरुको उल्लंघन गर्दै बालबालिका विरुद्ध भएका क्रियाकलापहरुको चर्चा गरिएको छ। साथै, उक्त लेखमा श्री ५ को सरकार र माओवादी दुवै पक्षलाई बालबालिकासम्बन्धी राष्ट्रिय तथा अन्तर्राष्ट्रिय प्रतिबद्धताहरु र बालबालिकाको संरक्षणमा दुवै पक्ष संवेदनशील भएर लाग्नुपर्ने कुरा उल्लेख गरिएको छ।

वर्ष ११, पूर्णाङ्क ४२, ०५९ साउनको अंकमा रमेशकुमार पौडेलले आमाको दूध खाँदै विवाहको कुरा छिनियो शीर्षकमा केस स्टडीसहित बाल विवाहको सवाललाई उजागर गर्नुभएको छ। लेखमा उहाँले बालविवाहको पृष्ठभूमि, बालविवाहका कारण, बालविवाहबाट हुनसक्ने हानी, बालविवाहसम्बन्धी कानुनी व्यवस्थाका साथै बालविवाहको कुसंस्कार समाप्तिका लागि गर्नुपर्ने प्रयासहरुका बारेमा समेत चर्चा गर्नुभएको छ।

वर्ष ११, पूर्णाङ्क ४५, ०५९ असोजको अंकमा बालअधिकारसम्बन्धी समसामयिक सवालमा सिविनका अध्यक्ष गौरी प्रधानसँगको अन्तरवार्ता छापिएको छ।

अन्तरवार्तामा नेपालमा बालबालिकाको समग्र स्थिति, संकटकालमा बालअधिकारको अवस्था, बालबालिकाको वर्तमान अवस्थाको आधारमा भविष्यको नेपाल कस्तो हुने, बालबालिकाको सशस्त्र युद्धमा संलग्नताको सवाल, जेनेभा महासन्धि र बालअधिकार महासन्धिको पालनाको अवस्था, बालअधिकारको क्षेत्रमा राज्यको भूमिका, सरकार र नागरिक समाजबीचको समन्वय र बालअधिकारको संरक्षणमा नागरिक समाजको भूमिकाको सवालमा चर्चा गरिएको छ।

**प्राची बाल विशेषांक**

वर्ष १२, पूर्णाङ्क ४७, ०६० साउनको अंकको प्राची बालश्रमसम्बन्धी विशेषांकको रुपमा प्रकाशित छ। उक्त अंक प्रकाश स्मृति दिवसको अवसरमा प्रकाशित भएकोले मानवअधिकारका अथक योद्धा स्व. प्रकाश काफ्लेसँग सम्बन्धित लेख, रचना पनि समावेश गरिएको छ। उक्त विशेषाङ्कमा बालबालिकासम्बन्धी निम्न लेख, रचनाहरु प्रकाशित भएका छन्:

- लेखनाथ भण्डारी- बालबालिका बेचबिखन मानव गरीमाविरुद्धको चुनौति
- गौरी प्रधान- जोखिमपूर्ण श्रम र बालबालिकाका भोगाइहरु
- शरद शर्मा- बालश्रमविरुद्ध अन्तर्राष्ट्रिय प्रतिबद्धता र नेपालको अवस्था
- डा. निरञ्जनप्रसाद उपाध्याय- गरीबी र बालश्रम
- मञ्जु खनाल- हराएको बालपन
- मिलन धरेल- शिक्षा त पाइयो, तर तलब हरायो
- अमिका राजथला- अन्तर्राष्ट्रिय प्रतिबद्धताले छुन नसकेका बाल श्रमिकहरु
- भोला महत- कमैया क्षेत्रमा बालश्रम
- राम कोइराला- इँटाभट्टामा बालश्रम
- कविता अर्याल- सशस्त्र संघर्ष र यसले जन्माएको बालश्रम
- प्रकाश भट्टराई- हिंसाभित्र हुर्किएका हाम्रा सन्ततिहरु
- रञ्जना थापा- बालअधिकारसम्बन्धी महासन्धि र नेपाल

बालश्रम सम्बन्धमा सिडब्लूएका मुकुन्द कट्टेलसँगको अन्तरवार्तालगायत् बालबालिकासम्बन्धी अन्य विभिन्न कथा, कविता र पुस्तक तथा संस्थाको बारेमा समेत उक्त अंकमा चर्चा गरिएको छ।

यसरी प्राचीको बालश्रम विशेषांकले नेपालमा प्रचलनमा रहेका विभिन्न खाले बालश्रमको चर्चा गर्दै बालश्रमको कारणले बालबालिकामा पर्न गएको असरहरुबारे यथेष्ट मात्रामा उजागर गर्ने प्रयत्न गरेको पाइन्छ। त्यस्तैगरी उक्त अंकले बालश्रम शोषणको अन्त्यका लागि अन्तर्राष्ट्रिय तथा राष्ट्रियस्तरमा भएका प्रयत्नहरुको चर्चा गर्दै नेपाली बालश्रमिकहरुको अवस्थालाई उजागर गर्ने कार्य गरेको छ। उक्त विशेषांकमा अन्तर्राष्ट्रिय प्रतिबद्धताअनुरुप नेपालमा बालबालिकाको पक्षमा कार्यान्वयनमा ल्याइएका संयन्त्र तथा बालअधिकार संरक्षण र सम्बर्द्धनमा भएका प्रावधानहरुको समेत चर्चा गरिएको छ। समग्ररुपमा उक्त विशेषांकले नेपाली बालश्रमिकको अवस्था विश्लेषण गर्दै त्यस क्षेत्रमा सम्बन्धित सरोकारवालाहरुको ध्यानाकर्षण गर्न सफल भएको मान्न सकिन्छ।

**प्राचीले आगामी अंकहरुमा उठाउनुपर्ने सवाल**

प्राची मानवअधिकार संस्कृति प्रबर्द्धनमा केन्द्रित भएकाले यसले मानवअधिकारका विभिन्न सवालहरुसँगसँगै बालबालिकासँग सम्बन्धित संयुक्त राष्ट्रसंघीय अन्तर्राष्ट्रिय सन्धि-महासन्धि, आईएलओ महासन्धि तथा अन्तर्राष्ट्रिय मानवीय कानुनहरुको कार्यान्वयनको स्थिति, त्यस्ता अन्तर्राष्ट्रिय प्रावधानहरु तथा शिखर सम्मेलनहरुमा राज्यले जनाएको प्रतिबद्धताअनुरुपको दायित्व पूरा गरेको छ कि छैन भन्ने सवालमा अनुगमन गर्ने र दायित्व पूरा गराउन दबाब सृजना गर्नेतर्फका सवालहरुलाई पनि प्राचीले आगामी अंकहरुमा स्थान दिनुपर्ने देखिन्छ। त्यसैगरी राज्यलाई बालबालिकासम्बन्धी थप अन्तर्राष्ट्रिय कानुनहरुको अनुमोदन गर्न/गराउन दबाब सृजना गर्ने गरी त्यस किसिमका खोजमूलक

प्राचीको बालश्रम विशेषांकले नेपालमा प्रचलनमा रहेका विभिन्न खाले बालश्रमको चर्चा गर्दै बालश्रमको कारणले बालबालिकामा पर्न गएको असरहरूबारे यथेष्ट मात्रामा उजागर गर्ने प्रयत्न गरेको पाइन्छ। त्यस्तैगरी उक्त अंकले बालश्रम शोषणको अन्त्यका लागि अन्तर्राष्ट्रिय तथा राष्ट्रियस्तरमा भएका प्रयत्नहरूको चर्चा गर्दै नेपाली बालश्रमिकहरूको अवस्थालाई उजागर गर्ने कार्य गरेको छ।


गरीबी र बालश्रम

जनसंख्याको झण्डै आधा हिस्सा ओगट्ने बालबालिकालाई गुणस्तरीय शिक्षा र प्राथमिक स्वास्थ्य सेवा पुऱ्याउनुपर्ने आवश्यकता टड्कारोरूपमा उपस्थित भएको छ। राज्यले सबै बालबालिकालाई अनिवार्य तथा सर्वसुलभ शिक्षा आर्जनको अवसर र स्वास्थ्य सेवा प्रदान गर्नेतर्फ ध्यान दिनुपर्ने हो। तर, राज्यले यस किसिमका क्षेत्रमा लगानी गर्नुको सट्टा सामाजिक क्षेत्रका बजेटहरूलाई कटौति गर्दै हातहतियार र सुरक्षामा अतुलनीय बजेट बृद्धि गर्दै र बालबबालिकाको भविष्यलाई अन्यौलग्रस्त बनाउँदै गइरहेको छ।

लेख, रचना प्रकाशित गर्नु आवश्यक छ।

प्राचीका आगामी अंकहरुमा बालबालिकाका सवालमा वाह्य देशहरुमा भएका सफलताका घटनाहरुलाई उदाहरणीयरुपमा प्रस्तुत गर्ने, बालबालिकाका सवालमा राष्ट्रिय तथा अन्तर्राष्ट्रिय मञ्चहरुमा नेपालमा बालबालिकाको अवस्था उजागर गर्ने, खुराक प्रदान गर्ने तथा त्यस्ता कार्यक्रमहरुमा उठेका ज्वलन्त सवालका निष्कर्षहरुलाई लेखको माध्यमबाट नेपाली जनमानसमा संप्रेषित गर्नेतर्फसमेत ध्यान दिनु आवश्यक देखिन्छ।

देश अहिले हिंसात्मक द्वन्द्वले गर्दा जर्जर स्थितिमा पुगेको पाइन्छ। यस हिंसात्मक द्वन्द्वले सबै क्षेत्रमा नकारात्मक असरहरु पारिरहेको छ। यसक्रममा सबैभन्दा बढी महिला र बालबालिकाहरु पीडित भइरहेका छन्। केही वर्षयता द्वन्द्वकै कारण शिक्षा क्षेत्र तहसनहस हुन पुगेको छ र बालबालिका शिक्षा आर्जन गर्ने अवसरबाट वञ्चित हुन पुगिरहेका छन्। तसर्थ, प्राचीले आगामी अंकहरुमा देशको विद्यमान हिंसात्मक द्वन्द्वलाई मध्यनजर गर्दै सामग्रीहरु प्रकाशन गर्नुपर्ने आवश्यकता देखिन्छ।

**निष्कर्ष**

विगतका विभिन्न अंकहरुमा प्राचीले बालबालिकासम्बन्धी विभिन्न पक्षहरुलाई उजागर गरेको पाइन्छ। प्राचीका विगत १२ वर्षलाई फर्केर हेर्दा शुरुको अवधिमा बालबालिकासम्बन्धी धेरै लेख, रचनाहरु समावेश नभएको पाइन्छ। तथापि बालबालिकासँग सम्बन्धित विषयवस्तुहरुलाई महिलाको सवालसँग जोडेर पनि चर्चा गरिएको पाइन्छ। तर, यस समीक्षामा केवल बालबालिकामा नै केन्द्रित भएर प्रकाशित भएका लेख, रचनाहरुका बारेमा चर्चा गरिएको छ।

प्राचीमा विगतमा उठाइएका विभिन्न सवालहरुले सरोकारवाला सम्बन्धित निकाय र व्यक्ति सबैमा संचेतना अभिबृद्धि गर्ने तथा बालअधिकारको संरक्षणमा सहयोग पुऱ्याउन उल्लेख्य भूमिका निर्वाह गरेका थिए। विगतमा उठाइएका ज्वलन्त सवालहरुमध्ये कमैया प्रथाभित्रको बँधुवा बाल मजदुरप्रथाको अन्त्यको घोषणा भएता पनि अन्य सवालहरु आज पनि उत्तिकै महत्वपूर्ण छन्। पूर्व कमैया बाल मजदुरहरु बाँधाबाट मुक्त भएपनि अहिले उनीहरुले आर्थिक तथा सामाजिक समस्याहरु उत्तिकै मात्रामा भोगिरहेको पाइन्छ।

देशमा आन्तरिक सशस्त्र द्वन्द्वले बालबालिकाको क्षेत्रमा सबैभन्दा बढी असर पुऱ्याउँदै गएको छ। युद्धरत दुवै पक्षले शैक्षिक क्षेत्रमा हस्तक्षेप गरिरहेका छन्। शान्ति क्षेत्रको रुपमा घोषित हुनुपर्ने विद्यालय तथा बालबालिका युद्धको भूमरीमा पिल्सिन वाध्य भइरहेका छन्। तसर्थ, बालबालिकालाई हिंसात्मक द्वन्द्वबाट मुक्त गर्नु आजको अनिवार्य आवश्यकता बनेको छ।

त्यसैगरी जनसंख्याको झण्डै आधा हिस्सा ओगट्ने बालबालिकालाई गुणस्तरीय शिक्षा र प्राथमिक स्वास्थ्य सेवा पुऱ्याउनुपर्ने आवश्यकता टड्कारोरुपमा उपस्थित भएको छ। राज्यले सबै बालबालिकालाई अनिवार्य तथा सर्वसुलभ शिक्षा आर्जनको अवसर र स्वास्थ्य सेवा प्रदान गर्नेतर्फ ध्यान दिनुपर्ने हो। तर, राज्यले यस किसिमका क्षेत्रमा लगानी गर्नुको सट्टा सामाजिक क्षेत्रका बजेटहरुलाई कटौती गर्दै हातहतियार र सुरक्षामा अतुलनीय बजेट बृद्धि गर्दै र बालबालिकाको भविष्यलाई अन्यौलग्रस्त बनाउँदै गइरहेको छ।

यस जटिल परिस्थितिलाई मध्यनजर गर्दै नागरिक समाज त्यसमा पनि मानवअधिकार तथा शान्तिको क्षेत्रमा कार्यरत संघसंस्थाहरुले बालबालिकाको सवाललाई केन्द्रविन्दु बनाउँदै भविष्यका कर्णधारहरुलाई सही मार्ग निर्देशन गर्दै सम्बन्धित सबै सरोकारवालालाई झकझकाउने प्रयत्नहरु आफ्ना प्रकाशनहरुमार्फत् गर्नुपर्ने आवश्यकता आज ज्वलन्तरुपमा देखापरेको छ। तसर्थ, आगामी दिनहरुमा प्राचीले बालबालिकाका सवालहरुलाई अझ बढी स्थान दिँदै बालबालिकाको हक, अधिकारको संरक्षण र सम्वर्द्धनमा जोड दिने खालका लेख, रचना र समाचारहरुलाई प्राथमिकताका साथ स्थान दिनुपर्ने देखिन्छ।

●

# प्राचीमा दलितका सवाल

– कृष्ण सुवेदी

मानवअधिकारका सम्बन्धमा संचेतना ल्याउनका लागि ०४९ साल यतादेखि प्राचीका ४९ अंक प्रकाशित भएका छन्। मानवअधिकारका विभिन्न क्षेत्रहरुलाई समेटेर प्रकाशन गरिने प्राची द्वैमासिकको पचासौं अंकमा जातीय उत्पीडनका कारण मानवअधिकारको संरक्षण तथा सम्बर्द्धनमा यसका अघिल्ला प्रकाशनहरुले पुऱ्याएको योगदानका सम्बन्धमा समिक्षात्मक विश्लेषण गर्नु यस लेखको उद्देश्य रहेको छ।

यो यात्रामा प्राचीमा छापिएका विभिन्न लेख तथा समाचारहरुमध्ये उत्पीडित जातिहरुको सम्बन्धमा जम्मा २२ वटा शीर्षकमा प्रकाशन भएका छन्। प्राची प्रकाशन भएको करिब १२ बर्षको दौरानमा पाँचवटा वर्षहरु (०५०, ०५२, ०५५, ०५६, र ०५९ साल) मा उत्पीडित जातिहरुका सम्बन्धमा कुनै पनि लेख, रचना तथा समाचारहरु प्रकाशन भएको पाइँदैन। ०४९ साल कार्तिक-मंसिर महिनामा प्रकाशित प्राचीको पहिलो अंकमा लेखक कुन्दन अर्यालको लेखले दलित जातिमा रहेको समस्यालाई सार्वजनिक सरोकारको विषयका रुपमा बाहिर ल्याउन सफल भएको छ। स्थलगत अध्ययनका आधारमा तयार पारिएको खोजमूलक लेखले साँच्चिनै ठूला भनिने जातका शिक्षित जमातले जातपातको सम्बन्धमा बनाएको मर्माहत धारणाले कसरी जरा गाडेको छ भन्ने सवाल उजागर गराउन लेखक सफल हुनुभएको छ। डोटी जिल्लाको भित्री डोटीका एउटा विद्यालयका संस्थापक प्रधानाध्यापक भन्छन्- "छुवाछूत प्रथा त कायम रहनै पर्दछ। कर्मअनुसारको फल न हो।" सतहमा देखिएको कुरा स्तम्भमा लेखिका लता प्याकुरेलले दलित जाति भनिएको वादी समुदायका महिलाहरुले भोग्नु परेको समस्या प्रस्तुत गर्नुभएको छ। यसका साथै, सुदुरपश्चिमाञ्चलको पहाडी जिल्लामा विद्यमान छुवाछूत प्रथाको कहाली लाग्दो प्रथाको अन्त्यका लागि एउटा बृहद् आन्दोलनको आवश्यकता लेखकले औंल्याउनु भएको छ। ०४९ सालकै पुस-माघको प्राचीको अंकमा "मानिसको हक खोजिरहेछन् नेपालका उत्पीडित मानिसहरु" शीर्षकमा खोजमूलक लेख प्रकाशित भएको पाइन्छ। उक्त अंकमा उत्पीडित जातीय आन्दोलनका अन्तर्राष्ट्रिय व्यक्तित्व डा. भिमराव रामजी अम्बेडकरको जीवनी प्रस्तुत गरिएको छ। समग्रमा हेर्दा प्राचीको प्रकाशन आरम्भ भएको साल ०४९ का अंकहरु उत्पीडित जातिहरुको मानवअधिकारको संचेतना जगाउने सवालमा गहकिलो भूमिका निर्वाह गर्न सफल भएका देखिन्छन्। दलित आन्दोलनका अग्रणी व्यक्तित्व तथा भारतको संविधान निर्माता डा. अम्बेडकरको जीवनीमा लेखिएको छ: "उन्नाइसौं शताब्दीमा भारतमा कथित अछूत परिवारमा जन्मनु भएका डा. भीमराव रामजी अम्बेडकरको नाम तार जत्तिकै चम्किलो छ। उहाँले स्वतन्त्र भारतको भाग्यरेखा तयार गर्ने क्रममा भारतको राष्ट्रिय जीवन तथा राजनीतिमा चीरकालसम्मका लागि छाप छोड्नुभएको छ।" समग्रमा भन्नुपर्दा प्राचीका ०४९ का अंकहरु उत्पीडनमा परेका जातिहरुको समस्या उजागार गर्न सफल भएको मान्नु पर्दछ।

तालिका १ अनुसार जम्मा २२ प्रकाशित रचनाहरु (छिटफुट समाचारबाहेक) मध्ये विभिन्न शीर्षकमा लेखिएका लेखहरुको संख्या जम्मा १० रहेको छ भने उत्पीडित जातिका पक्षमा संचालन भएका आन्दोलन तथा सम्मेलनहरुका सम्बन्धमा प्रकाशित समाचारले दोश्रो स्थान



| उत्पीडित जातिहरुका बारेमा प्राचीमा प्रकाशित सामग्रीहरुको विवरण (०४९-०६०) | | | | |
|---|---|---|---|---|
| क्र.सं. | मिति | शीर्षक | लेखक | प्रकार |
| ०१ | कार्तिक-मंसिर,०४९, बर्ष १, अंक १ | डोटी जहाँ परिवतर्नको पद चाप सुनिँदैन | कुन्दन अर्याल | खोजमूलक लेख |
| ०२ | फागुन-साउन, ०४९, बर्ष १, अंक ३, ४, ५ | मानिसको हक खोजीरहेछन नेपालका उत्पीडित | उ. जा. उ. मञ्च | लेख |
| ०३ | फागुन-साउन, ०४९, बर्ष १, अंक ३, ४, ५ | डा. भीमराव रामजी अम्बेकडरको जीवनी | अ. पद्मलाल वि.क. | जीवनी |
| ०४ | फागुन-साउन, ०४९, बर्ष १, अंक ३, ४, ५ | वादीलाई विकल्प प्रदान गर्ने दायित्व सरकारको हो | लता प्याकुरेल | स्थलगत |
| ०५ | साउन-भदौ, ०५१, बर्ष १, अंक १ | बफाङ : जुठो पुरो एउटालाई, डाडु पुन्यूँ अर्कोलाई | लोक ब. बराल | स्थलगत रिर्पोट |
| ०६ | फागुन-जेठ, ०५३-५४, वर्ष ५, अंक ४-५ | के नागरिकता जातिभदेको लाइसेन्स हो ? | टेक ब. विश्वकर्मा | लेख |
| ०७ | असार ०५७, वर्ष ८, पूर्णाङ्क २९ | उत्पीडितहरुको पक्षमा सशक्त आन्दोलन | प्राची | समाचार |
| ०८ | असार ०५७, वर्ष ८, पूर्णाङ्क २९ | लहान आन्दोलनले गुणात्मक परिवर्तन ल्याउँछ | डा. प्रेमपति | अन्तरवार्ता |
| ०९ | असार ०५७, वर्ष ८, पूर्णाङ्क २९ | सवा सेर गहुँ | प्रेमचन्द | कथा |
| १० | साउन, ०५७, वर्ष ९, पूर्णाङ्क ३० | सम्पादकीय | | |
| ११ | साउन, ०५७, वर्ष ९, पूर्णाङ्क ३० | जातपात र छुवाछूत प्रथा: शास्त्रीय सन्दर्भ, वर्तमान स्थिति र समाधानको प्रक्रिया | मोदनाथ प्रश्रित | इतिहास |
| १२ | साउन, ०५७, वर्ष ९, पूर्णाङ्क ३० | लहानमा जातीय विभेद विरोधी संघर्ष | रमेशकुमार पौडेल | समाचार र लेख |
| १३ | साउन, ०५७, वर्ष ९, पूर्णाङ्क ३० | नेपालमा दलितहरुबीच गरिबी | डा. शिव शर्मा | खोजमूलक लेख |
| १४ | साउन, ०५७, वर्ष ९, पूर्णाङ्क ३० | दलित सम्बन्धमा पार्टीहरुको बोली | ०५६- चुनावी घोषणापत्र | समाचार |
| १५ | साउन, ०५७, वर्ष ९, पूर्णाङ्क ३० | दलित भएकै कारण धेरै दलित शोषित भएका छन् | विश्वेन्द्र पासवान | अन्तरवार्ता |
| १६ | साउन, ०५७, वर्ष ९, पूर्णाङ्क ३० | छुवाछूतविरुद्धको पाँच दशक लामो संघर्ष | जीवनी | भद्रमान घले |
| १७ | साउन, ०५७, वर्ष ९, पूर्णाङ्क ३० | डोम समुदाय र बालविवाहको | कृष्ण लामा | खोजमूलक लेख |
| १८ | साउन, ०५७, वर्ष ९, पूर्णाङ्क ३० | राम राज्यको काँढा | विनय कसजू | लघुकथा |
| १९ | साउन, ०५८, बर्ष १०, पूर्णाङ्क ३६ | दलित महिलाहरुको आवाज | दिपक विश्वकर्मा | समाचार |
| २० | असोज ०५८, बर्ष १०, पूर्णाङ्क ३७ | दलित मुक्ति आजको आवश्यकता | लाल ब. विश्वकर्मा | खोजमूलक लेख |
| २१ | चैत्र ०५८, बर्ष १०, पूर्णाङ्क ४० | दलित आयोग कसरी अघि बढ्ला | बाबुराम विश्वकर्मा | लेख |
| २२ | चैत्र ०५८, बर्ष १०, पूर्णाङ्क ४० | विधेयक नै दलित आयोगको मेरुदण्ड हो | पद्मसिंह विश्वकर्मा | अन्तरवार्ता |
| २३ | चैत्र ०५८, बर्ष १०, पूर्णाङ्क ४० | दलित आयोग वाच डगसमेत बन्नु पर्दछ | जीतु गौतम | अन्तरवार्ता |
| २४ | विभिन्न अंकहरुमा | फुटकर समाचार | | |

ओगटेको छ, यसको संख्या ५ छ। तेश्रो स्थानमा दलित आन्दोलनका ४ जना अग्रणीहरुको भनाई अन्तरवार्ताको रुपमा प्रकाशित गरिएको छ। दुईवटा कथाहरु उत्पीडित जातिहरुको विषयमा लेखिएका छन्।

प्राचीको ०५१ सालको पहिलो अंकमा लेखक लोकबहादुर बरालको स्थलगत अध्ययनका आधारमा बझाङ जिल्लामा दलित भनिएको आधारमा उक्त समुदायले झेल्नु परेका समस्याहरुलाई उजागार गरिएको छ। त्यस्तै ०५३-०५४ को अंक ४-५ मा जातको आधारमा पिल्सन वाध्य उत्पीडित जातिहरुको सवालमा एउटा लेख प्रकाशित छ। लेखक टेकबहादुर विश्वकर्माले दलित भएका आधारमा राज्यले जन्मसिद्ध नागरिकले पाउने नागरिकताको नैसर्गिक अधिकारबाट कसरी वञ्चित गरेको रहेछ भन्ने सवालमा भएका तथ्यलाई सार्वजनिक सरोकारको विषय बनाउन प्रयत्न गर्नुभएको छ। प्राची प्रकाशनको शुरुको वर्षलाई छोडेर बाँकी छ बर्षहरु (०५०-०५६) सालमा उत्पीडित जातिहरुका सम्बन्धमा केवल २ वटा मात्र रचनाले स्थान पाएको देखिन्छ।

प्राची प्रकाशनको १२ वर्षको दौरानमा उत्पीडनमा परेका तथा समाजमा दलित भनेर चिनाइएका जातिहरुको सवालमा मानवअधिकारको संरक्षण तथा सम्बर्द्धनका लागि ०५७ सालमा प्रकाशित अंकहरुले महत्वपूर्ण स्थान हासिल गर्न सफल भएको पाइन्छ। ०५७ असारमा प्रकाशित प्राचीको एउटै अंकमा ३ वटा रचनाहरु दलितको सम्बन्धमा प्रकाशन भएका छन्। लहानमा चमार जातिका व्यक्तिहरुमाथि लगाइएको अमानवीय आर्थिक नाकाबन्दीका विरुद्ध मानवअधिकारको आन्दोलनमा सहभागी हुन आउनु भएका भारतका प्रखर व्यक्तित्व डा. प्रेमपतिको सारगर्भित विचार अन्तरवार्ताका रुपमा छापिएको छ। डा. प्रेमपतिले लहानको आन्दोलनलाई महत्व दिँदै भन्नुभएको छ- "लहानको आन्दोलनले गुणात्मक परिवर्तन ल्याउँछ।" उहाँले जातीय विभेदविरुद्धको आन्दोलनमा इन्सेकले निर्वाह गरेको भूमिकाको उच्च प्रशंसा गर्नु भएको थियो। उक्त अंकमा जातीय विभेद विरुद्धमा लेखिएको कथा "सवा सेर गहुँ" प्रकाशित छ। हिन्दी भाषाबाट अनुवाद गरिएको उक्त कथाको लेखक प्रेमचन्द हुनुहन्छ। प्रकाशित संख्याको आधारमा हेर्दा कथाको रुपमा प्रकाशित रचना कमै भएता पनि दलितहरुले भोग्नु परेको कथालाई केलाउन निकै सफल भएको मान्नु पर्दछ।

०५७ साउन महिनाको प्राची उत्पीडित जातिहरुको पक्षमा विशेषांकको रुपमा नै प्रकाशित भएको छ। लेखक मोदनाथ प्रश्रितले "जातपात र छुवाछूत प्रथा: शास्त्रीय सन्दर्भ र समाधानको प्रक्रिया" लेखमार्फत् छुवाछूत प्रथाको शुरुवात र समाधानको उपायको सम्बन्धमा प्रष्ट धारणा राखेको पाइन्छ। यसै अंकमा डा. शिव शर्माले नेपालमा दलितहरुबीच गरिबी शीर्षकअन्तर्गत विभिन्न आर्थिक, सामाजिक परिसूचकका आधारमा दलितहरुमा रहेको गरिबीको बारेमा प्रकाश पार्नुभएको छ। अत्यधिक दलित बसोबास गर्ने १० जिल्लाहरुको पहिचान गर्दै दलितको उत्थानका लागि गैरसरकारी संस्थाहरुलाई संचालन गर्नुपर्ने कार्यक्रम सम्बन्धमा उहाँले सुझाव प्रस्तुत गर्नु भएको छ। कृषि मजदुर तथा दलित जातिहरुका क्षेत्रमा अनुसन्धानरत डा. शर्माले केस स्टडीहरु पनि समावेश गर्नुभएको उक्त लेख सामाजिक कार्यकर्ताहरुले पढ्न र मनन गर्न लाभदायक छ। ०५७ चैत ४ गते शुरु भएको लहानको जातीय विभेदविरोधी संघर्षका सक्रिय कार्यकर्ता विश्वेन्द्र पासवानको अन्तरवार्ता पनि प्रस्तुत गरिएको उक्त अंकमा रमेश पौडेलले उक्त संघर्षको विस्तृत घटनालाई लेखमार्फत् प्रस्तुत गर्नुभएको छ। यसका साथै दलितहरुले भोग्नु परेको अवस्थाको बारेमा नेपालका प्रमुख राजनीतिक पार्टीहरुको दृष्टिकोणका बारेमा ०५६ सालको आम निर्वाचनका सन्दर्भमा प्रकाशित चुनावी घोषणापत्रको साभार प्रस्तुत गरिएको छ। लेखक कृष्ण लामाले डोम समुदाय र बालविवाह सम्बन्धमा खोजमूलक प्रस्तुति गर्नु भएको छ। उहाँ लेख्नुहन्छ- डोम समुदायमा कलंकको रुपमा रहेको बालविवाहका घटना, बालविवाहको गम्भीर र




विभिन्न शीर्षकमा लेखिएका लेखहरुको संख्या जम्मा १० रहेको छ भने उत्पीडित जातिका पक्षमा संचालन भएका आन्दोलन तथा सम्मेलनहरुका सम्बन्धमा प्रकाशित समाचारले दोश्रो स्थान ओगटेको छ, यसको संख्या ५ छ। तेश्रो स्थानमा दलित आन्दोलनका ४ जना अग्रणीहरुको भनाई अन्तरवार्ताको रुपमा प्रकाशित गरिएको छ। दुईवटा कथाहरु उत्पीडित जातिहरुको विषयमा लेखिएका छन्।




हृदयविदारक घटनाहरु डोम जातिको घर-घरमा सुन्न पाइन्छ। डोम जातिमा व्याप्त मध्ययुगीन र बर्बर संस्कारको अन्त्य गर्न, रुढीवादी, पुरातनपन्थी र अन्धविश्वासको दलदलमा जकडिएका समस्याहरुलाई हटाउनका लागि विभिन्न गैरसरकारी संस्था तथा राज्यले गम्भीर भएर विशेष कार्यक्रम संचालन गर्नुपर्नेमा उहाँले जोड दिनुभएको छ। साहित्यकार तथा पत्रकार विनय कसजूले रामराज्यको काँढा शीर्षकको लघुकथामार्फत् छुवाछूतको अवधारणाविरुद्ध गतिलो प्रहार गर्नुभएको छ।

०५८ सालमा प्रकाशित प्राचीका अंकहरुमा दलितहरुको आवाज उठाउन सफल भएको पाइन्छ। उक्त वर्ष विभिन्न लेख समाचार तथा अन्तरवार्ताको रुपमा पाँचवटा समाचारहरु प्रकाशन भएको पाइन्छ। लेखक लालबहादुर विश्वकर्माको लेखमा जातीय छुवाछूत प्रथाको विजारोपण, यसले समाजमा पारेका नकारात्मक प्रभाव तथा समाधानका उपायहरुलाई उठान गरिएको छ। जातको आधारमा गरिने विभेदले दलितहरुमा परेको उत्पीडन, विशेष गरी समाजमा विद्यमान छुवाछूत प्रथाको विरोधमा धेरै लेखहरु केन्द्रित भएको पाइन्छ। समाचारको रुपमा प्रकाशित रचनाहरुले कथित दलित भएको आरोपमा कथित ठूला जात भनिनेहरुले समाजमा गरेका विभेदपूर्ण सवालहरुका सम्बन्धमा मानवअधिकार प्राप्तिको आन्दोलनमा भए-गरेका संघर्षहरुले समाचारको रुपमा स्थान पाएका छन्। लेखक दिपक विश्वकर्माले दलित महिलाहरुको आवाज शीर्षकमा अन्तर्राष्ट्रियस्तरमा भएका प्रयासहरु समाचारको रुपमा प्रस्तुत गर्नुभएको छ। यसको अलावा समसामयिक समाचारका आधारमा अन्तरवार्ताहरु प्रकाशित गरिएका छन्। यसका अतिरिक्त राष्ट्रिय दलित आयागको स्थापनापछि उक्त आयोगका अध्यक्ष तथा सदस्यहरुको अन्तरवार्ता प्रकाशित छन्।

०५९ सालमा प्राचीका अंकहरुमा दलितको विषयमा कुनै स्थान दिएको पाइएन। त्यस्तै ०६० सालका अंकहरुमा पनि छुवाछूत प्रथाका सम्बन्धमा कुनै पनि समाचारले स्थान पाउन सकेको छैन। समग्रमा भन्नुपर्दा, प्राचीको बाह्र बर्षको दौरानमा प्रकाशित ४९ अंकहरुमध्ये ०५७ सालको साउन महिनामा प्रकाशित छुवाछूतविरोधी आन्दोलन विशेषांकमा दलित जातिहरुको मानवअधिकार उल्लंघनका घटनालाई विशेष प्राथमिकताका आधारमा प्रकाशित हुनु प्रशंसायोग्य कार्य मान्नु पर्दछ। यसका अलावा विभिन्न समयमा खोजमूलक लेख, कथा तथा अन्तरवार्ता, जीवनी प्रकाशित गरेर दलितहरुले भोग्नु परेका समस्या उजागार गर्न तथा छुवाछूतविरोधी संघर्षका गतिविधिलाई आम जनमानसमा सुसूचित गर्ने कार्यलाई निरन्तरता प्रदान गर्न आगामी अंकहरुमा दलित जातिहरुको सवालमा एउटा छुट्टै स्तम्भ राखी नियमितरुपमा प्रकाशन गरे अझ प्रभावकारी हुने थियो।

विभिन्न समयमा खोजमूलक लेख, कथा तथा अन्तरवार्ता, जीवनी प्रकाशित गरेर दलितहरुले भोग्नु परेका समस्या उजागार गर्न तथा छुवाछूतविरोधी संघर्षका गतिविधिलाई आम जनमानसमा सुसूचित गर्ने कार्यलाई निरन्तरता प्रदान गर्न आगामी अंकहरुमा दलित जातिहरुको सवालमा एउटा छुट्टै स्तम्भ राखी नियमितरुपमा प्रकाशन गरे अझ प्रभावकारी हुने थियो।

# प्राचीमा समेटिएका यातना सम्बन्धी विषयवस्तु नियाल्दा

**– कृष्ण गौतम**

मानवअधिकारसम्बन्धी विविध विषय, सवाल र घटनाक्रमलाई समेट्दै "प्राची" संचेतना द्वैमासिक ४९ अंक प्रकाशित भई ५० अंकसम्म आइपुगेको छ। यस क्रममा मानवअधिकारका गम्भीर विषय "यातना" का बारेमा पनि आफ्ना अंकहरुमा समेट्दै आइरहेको पाइन्छ। "यातना" का विभिन्न स्वरुप (प्रकार), घटनाहरु, वैधानिक स्थितिका बारेमा प्रशस्त चर्चा भएको छ। प्रस्तुत लेखमा "प्राची" भित्र समेटिएका यातनासँग सम्बन्धित विषयवस्तुहरुका बारेमा चर्चा गर्ने प्रयास गरिएको छ।

"यातना हिंसात्मक प्रवृत्तिको उपज हो" शीर्षकमा इन्सेकका संस्थापक सुशील-प्रकाशद्वारा लेखिएको लेख यसको पहिलो अंकमा प्रकाशित भएको छ। यस लेखमा यातना सभ्य समाजका लागि नसुहाउने व्यवहार हो भन्ने मान्यतालाई उजागर गरिएको छ। "जनताले पाए जनताले, प्रहरीले पाए प्रहरीले यातना दिने" कार्य हुँदै गयो भने समाज शान्तिमय हैन हिंसात्मक हुँदै जान्छ भन्दै कुनै पनि आरोपमा प्रहरी हिरासतमा लिएका व्यक्तिलाई अमानवीय यातना दिने र जबरजस्ती कुनै लिखत स्वीकार्न लगाउने कार्यको विरोध गर्नु यातनाको विरोध हो भनिएको छ। वाग्लुङ, बभाङमा भएका घटनाहरुले प्रहरीको कार्यशैलीमा परिवर्तन नआएको तथ्य औंल्याइएको छ। लेखमा उल्लेख गरिएको छ- "नेपालमा राजनीतिक व्यवस्थाको परिवर्तन पश्चात् पनि सरकारले प्रहरीको पञ्चायतकालीन क्रूर र अमानवीय संवेदनायुक्त मानिसका रुपमा पेश गराउन सकेन।" यातना विद्यमान हुनुको पछाडि नेपालको प्रहरीको भन्दा श्री ५ को सरकारको दोष नै प्रमुख रहेको निष्कर्ष निकालिएको छ।

"निर्धक्क भएर बसेको छैन जेल भित्र मानवअधिकार" शीर्षक (वर्ष १, अंक २) मा राष्ट्रिय परिवेश स्तम्भमा कुन्दन अर्यालले लेख्नु भएको लेखमा प्रजातान्त्रिक व्यवस्थाको मान्यता अनुसार जेलहरु यातना गृह नभई सुधार गृह हुनु पर्नेमा व्यवस्था परिवर्तन पछि पनि जेल र बन्दीहरुको स्थितिमा सुधार हुन नसकेको वास्तविकतालाई उजागर गरिएको छ। कैयौं जेलहरुको भौतिक अवस्था एकदमै जीर्ण भइसकेको, क्षमताभन्दा बढी बन्दीहरु राख्ने गरिएको, आस्थाका बन्दीहरुको सही पहिचान नगरिएको, आश्रित बालबालिकाको लागि उचित व्यवस्था नभएको, स्वास्थ्य सुविधाबाट वञ्चित भएको तथ्य लेखमा उठाइएको छ।

बद्रिराम भण्डारीको अध्यक्षतामा गठित कारागार सुधार समिति ०४७ ले दिएका सुझावहरु कार्यान्वयन नहुनुले पनि कारागार र बन्दीहरुको अवस्थामा सुधार नभएको र विभिन्न यातना भोग्नु परेको तथ्य यस लेखमा औंल्याइएको छ।

"प्रहरी ज्यादतिको जाँच गरियोस्" शीर्षकमा (वर्ष १, अंक २-४-५) मा कुन्दन अर्यालद्वारा लिखित लेखमा प्रजातन्त्र पुनर्वहालीपछि पहिलो जननिर्वाचित सरकारको पालमा संचालित विभिन्न आन्दोलनको क्रममा भएका हत्याका घटनाहरुका साथै स्वेच्छाचारी गिरफ्तारी, बेपत्ता पार्ने, यातना दिने जस्ता घटनाहरुको फेहरिस्त प्रस्तुत गरिएको छ।

"पञ्चायत गयो, स्वच्छाचारी गिरफ्तारीको प्रचलन गएन" शीर्षकमा राष्ट्रिय परिवेश स्तम्भमा बेपत्ता पारिएका घटनाहरुका बारेमा लेखिएको छ। पञ्चायत कालमा ०४२ मा सरकारद्वारा गिरफ्तार गरी बेपत्ता पारिएका साकेतचन्द्र मिश्र, ईश्वरबहादुर लामा, पदमबहादुर लामा, डा.




**कैयौं जेलहरुको भौतिक अवस्था एकदमै जीर्ण भइसकेको, क्षमताभन्दा बढी बन्दीहरू राख्ने गरिएको, आस्थाका बन्दीहरुको सही पहिचान नगरिएको, आश्रित बालबालिकाको लागि उचित व्यवस्था नभएको, स्वास्थ्य सुविधाबाट वञ्चित भएको तथ्य लेखमा उठाइएको छ।**




लक्ष्मीनारायण झा, सत्यनारायण शाह, महेश्वर चौलागाईंलाई बेपत्ता पारिएको सम्बन्धमा एम्नेष्टी इन्टरनेशनलद्वारा ०४९ जेठ-असारमा प्रकाशित प्रतिवेदन- "नेपालको मानवअधिकार सम्बन्धी चासोको सारांश" बाट साभार सामाग्री प्रकाशित गरिएको छ।

०४९ को स्थानीय निकाय निर्वाचनको क्रममा ०४९ जेठ १० गते रामेछाप जिल्लाको दोरम्बा गाविस-८ बाट बेपत्ता पारिएका भुवनलाल थापा मगर र ०५० असार ११ गते काठमाडौंबाट प्रहरीले गिरफ्तार गरी बेपत्ता पारिएका प्रभाकर सुवेदीको घटना उठान गरिएको छ।

प्रजातन्त्रमा पनि हराउँदैछन्- प्रभाकरहरु उपशीर्षकमा नरनाथ लुइँटेलको लेखमा प्रभाकर सुवेदीलाई बेपत्ता पारिएको घटनाको केसस्टडी प्रस्तुत गरिएको छ।

यसै अंकमा सिमाना पारी स्तम्भमा "विद्यालयमै क्रुरतम् यातना" शीर्षकमा तीन जना नेपाली विद्यार्थीहरुलाई भारतको मद्रास स्थित एक विद्यालयमा एक विद्यार्थीको रहस्यमय ढंगले भएको मृत्यु घटनाको अनुसन्धानका क्रममा एउटा एकान्त कोठाभित्र सिक्रीले बाँधेर जनावरलाई जस्तै यातना दिइएको घटनासम्बन्धी समाचार प्रकाशित भएको थियो।

०५३ भदौ-असोज, वर्ष ८, अंक १ मा "ढुकुर भन्दा सहजै मानिस मारिन्छन्" शीर्षकको आवरण समाचार सूर्य थापाले माओवादी अति प्रभावित मानिने रोल्पा र रुकुमको स्थलगत भ्रमणपछि तयार गरेको सामग्री छापिएको छ। सो खोजमूलक समाचारमा रोल्पा र रुकुममा माओवादी दमन गर्न सरकारले रोमियो अप्रेशनको नाममा प्रहरी कारवाही संचालन गर्दा निर्वाचित जनप्रतिनिधि, शिक्षक, विद्यार्थी लगायत् सयौंलाई विभिन्न झुठा मुद्दा लगाई गिरफ्तार गर्ने यातना दिने गरेका घटनाहरुको वर्णन गरिएको छ। पीडित स्वयम्सँग लिइएको अन्तरवार्ता समेत प्रस्तुत गरिएको छ। रोल्पा जिल्ला विकास समितिका सभापति झग्गु सुवेदीलाई ०५२ फागुन ३ गते जिविसमा काम गरिरहेकै अवस्थामा गिरफ्तार गरी गम्भीर यातना दिइएको र पछि जेल सार गर्दै तुल्सीपुर जेलमा पुऱ्याइएको थियो। त्यहाँ पनि उहाँलाई गम्भीर यातना दिई अवस्था भएपछि काठमाडौंस्थित भद्रगोल जेलमा सरुवा गरिएकोसम्मका घटनाक्रम यसै अंकको प्राचीमा समेटिएको छ। यसैगरी उवा गाविसका अध्यक्ष देउसिंहको पूरा परिवारलाई मुद्दा लगाई तारिख बोक्न बाध्य पारिएको घटना, रोल्पा जेलमा क्षमता भन्दा बढी बन्दी राखेकाले बन्दीहरु सुत्दा कोल्टे फेर्न समेत नमिल्ने स्थिति चित्रण गरिएको छ। त्यतिबेला जेलमा ८८ पुरुष, ७ जना महिला र २ जना नाबालक रहेका थिए। जेलमा रहेका दाङ जिल्ला लक्ष्मीपुर गाविस-२ भैसपुरका विनोद शर्मालाई होलेरी घटनामा संलग्न भएको आरोपमा ५ वटा मुद्दा लगाइएको र गिरफ्तार गरी प्रहरी हिरासतमा रहँदा उँधोमुण्टो पारी झुण्ड्याएर लाठीले धुँडा र पैतलामा हिर्काउने, हातमा हान्ने, नाङ्गो पारेर बुटले कुल्चने, हातहरु बाँधेर तिघ्रामा पिट्ने गर्दा उहाँ दुई घण्टा बेहोस हुनु परेको घटना पनि समेटिएको छ। यसैगरी खुमेल गाविसमा जनमोर्चा कार्यकर्ता नरेन्द्र थापालाई ज्यानमार्ने उद्योग गरेको आरोपमा गिरफ्तार गरिएको १६ दिनसम्म प्रहरी हिरासतमा राखेर असिम यातना दिइयो। हिरासतमा उनलाई कुटपिट गर्ने, हातको औंलामा पिन घोच्ने, बुटले कुल्चने, पैतलामा पिन घोच्ने, लौरो घाँटीमा घोचिदिने जस्ता दुर्व्यवहार गरी यातना दिइएको घटना पनि खोजमूलक समाचारले समेटेको छ।

०५३ कार्तिक-मंसिर, अंक २ मा "नेपालका प्रहरी हिरासतहरु मृत्यु केन्द्रमा परिणत" शीर्षकको खोजमूलक आवरण समाचार प्रकाशित भएको छ। नरनाथ लुइँटेल र सूर्य थापाले तयार पार्नु भएको उक्त सामग्रीमा प्रहरी हिरासतमा लिइएका व्यक्तिहरुको यातनाकै कारण मृत्यु हुने गरेका घटनाहरु समावेश गरिएको छ। त्यसताका प्रहरी हिरासतमै मृत्यु भएमा काठमाडौं चाबहिलमा दर्पण वर्मा, सिन्धुपाल्चोकका कुलबहादुर खत्री, दाङका भानुप्रताप चौधरी र रुपन्देही वन कार्यालय हिरासतमा मर्ने पूर्णबहादुर हमालका घटनाहरुको विस्तृत विवरण समावेश गरिएको छ। त्यस सम्बन्धमा तत्कालिन प्रहरी महानिरीक्षक मोतिलाल बोहोरालगायतका सरोकारवालाहरुसँग लिइएको अन्तरवार्ता पनि समावेश गरिएको छ।

वर्ष ७, पूर्णाङ्क २७, ०५६ मंसिरको अंकमा मानवअधिकारको गिर्दो अवस्था शीर्षकमा कृष्ण गौतमद्वारा लिखित लेखको "बेपत्तै-बेपत्ता" उपशीर्षकमा गैरकानुनी ढंगले गिरफ्तारी गर्ने र बेपत्ता पार्ने क्रम तिब्र हुन थालेकोमा स्थिति चित्रण गरिएको छ। यसैगरी वर्ष ९, पूर्णाङ्क ३३, माघ ०५७ मा गगन विष्टद्वारा तयार गरिएको आलेख कोही बेपत्ता पारियोस्, पूर्णाङ्क ४९ मा राष्ट्रिय

हिरासतमा उनलाई कुटपिट गर्ने, हातको औंलामा पिन घोच्ने, बुटले कुल्चने, पैतलामा पिन घोच्ने, लौरो घाँटीमा घोचिदिने जस्ता दुर्व्यवहार गरी यातना दिइएको घटना पनि खोजमूलक समाचारले समेटेको छ।

# नेपालमा प्रचलित यातनाका केही तरिकाहरू

## शारिरिक यातना

### योजनाबद्ध कुटपिट गर्ने

- लौरो, टायर, बाँसको भाटाले पैतालामा पिट्ने गरेको पाइन्छ।
- दुईतिरका कानमा एकै पटक भ्याम-भ्याम पिट्ने गरिएको पाइन्छ।
- घुँडा, पेट, गाला, छेपारी फिला र नली खुट्टामा पिट्ने गरेको पाइन्छ।
- शरीरका विभिन्न भागमा कोर्रा, बुट, बक्सिङ या मुड्कीले पिट्ने गरेको पाइन्छ।

### यौनजन्य दूर्व्यवहार गर्ने

- बलात्कार गर्ने गरेको पाइन्छ।
- स्तन र गुप्ताङ्गमा चिमोट्ने गरेको पाइन्छ।
- गुप्ताङ्गमा लौरो घुसारी दिने गरेको पाइन्छ।
- लिङ्गमा डोरी बाँधिएर पीडा दिने गरेको पाइन्छ।
- करेन्ट, हिटर वा बिजुलीको नाङ्गो तारमा पिसाब फेर्न लगाउने गरेको पाइन्छ।
- गुप्ताङ्गमा बिजुलीको झड्का लगाउने गरेको पाइन्छ।

### करेन्ट लगाउने

- कान, जिब्रो, औंलाको टुप्पा र गुप्ताङ्गहरु जस्ता संवेदनशील अङ्गहरुमा विजुलीको झड्का लगाउने गरेको पाइन्छ।

### निस्सासिदो बनाउने

- वाल्टी, वाटा वा यस्तै कुनै भाँडामा पानी भरेर त्यसमा डुवाई सास फेर्न नसक्ने गरी लगातार निस्सासिदो वनाउने गरेको पाइन्छ।

### पोल्ने

- सिग्रेट, तातो फलामे डण्डी, वलिरहेको वत्ती तथा अगुल्टाले शरीरका विभिन्न ठाउँमा पोल्ने गरेको पाइन्छ।

### झुण्ड्याउने

- एउटा या दुईटै हात अथवा खुट्टा वाँधेर झुण्ड्याउने गरेको पाइन्छ। खुट्टा माथि र टाउको तल पारी झुण्ड्याएर कुटपिट गरिएको पनि पाइन्छ।

### अङ्गभङ्ग गराउने

- कान मोल्ने, आपसमा मोल्न लगाउने, कपाल, दारी वा जुँगा उखेली दिने, कपाल मुडिदिने, नाककान चिमोटिदिने, जब्रो थुत्ने, लिङ्ग चुँडिदिने, कन्सिरीका रौं तानेर उखेल्ने, नङ उक्काई दिने, नङमा पिन रोप्ने, पैतालामा बलिरहेको आगोले पोलेर घाउ बनाइदिने गरेको पाइन्छ।
- पाखुरा हातका औंला तथा खुट्टामा लाठी वा ढुंगा राखेर पेल्ने गरेको पाइन्छ।

### दन्त यातना दिने

- कुटेर दाँत भाँचिदिने, दाँत हल्लिने गरी गाला वा टाउकोमा पिट्ने र दाँत जवरजस्ती उंखेलिदिने गरेको पाइन्छ।

### विविध

- तुरुङ तथा ढिंगुरामा हाल्ने गरिएको पाइन्छ।
- एकै पोजिसनमा लगातार बसाल्ने, उठाउने वा उभ्याउने गरेको पाइन्छ।
- नेल र गल्फन्दी लगाउने गरेको पाइन्छ।
- सिस्नु र अल्लो जस्ता शरीरमा गम्भीर असर पार्ने खालका वनस्पतिले शरीरमा कुटपिट गर्ने गरेको पाइन्छ।
- खाडलमा पुर्ने भनेर स्वयंमलाई खाडल खन्न लगाउने।
- नाङ्गै पारेर चिनी पानी शरीरमा दर्लं चौरमा सुताएर कमिलालाई टोकाउने, जिउँदै खाडलमा हाली घाँटीसम्म माटोले पुरिदिने गरेको पाइन्छ।
- हिउँको ढिकामा नाङ्गै सुताउने र झुण्ड्याएर तलबाट खुर्सानीको धुँवा लगाउने गरेको पाइन्छ।
- खुर्सानीको धुलो या झोल नाक आँखा या मुखमा हालिदिने गरेको पाइन्छ।
- गहुँका टुसा वा अन्य वस्तुहरु निल्न वा उचाल्न लगाउने गरेको पाइन्छ।
- मुर्गा बनाउने वा टाउको टेकेर हिड्न लगाउने गरेको पाइन्छ।

## मानसिक यातना

### एकान्तवासमा राख्ने

- पक्राउ परेका व्यक्तिलाई आवाज नसुन्ने, उज्यालो नपस्ने र कसैसाग भेटघाट गर्न नसक्ने गरी एकान्त र सुनसान ठाउँमा राख्ने गरेको पाइन्छ।

### धम्की र त्रासपूर्ण व्यवहार

- लगातार धम्की दिइरहने, "यसो भनिनस् वा गरिनस् भने तँ मारिन्छस्" भन्ने, तेरै अगाडि तेरो साथी वा वावु-आमा वा पति-पत्नीलाई यातना दिन्छु, दूर्व्यवहार गर्छु भनेर धम्क्याउने गरेको पाइन्छ।

### आँखा अगाडि अरुलाई यातना दिनु

- आफूले एकदमै माया गरेको व्यक्तिलाई आफ्नै आँखाले देख्ने गरी कुटपिट र अन्य यातना दिने गरेको पाइन्छ।

### अपमान बोध तथा यौन यातना

- आफ्नो इच्छा र नैतिकतामा आघात पर्ने काम गर्न वाध्य पार्ने गरेको पाइन्छ।
- आफन्त वा आफूले एकदमै माया गरेका व्यक्तिहरुका विरुद्ध वाहियात र घिनलाग्दा कुरा वोल्न विवश पार्ने गरेको पाइन्छ।
- यातना दिने व्यक्तिले आफ्नो गुप्ताङ्ग देखाइदिने, समात्न लगाउने तथा खान लगाउनेजस्ता निकृष्ट कार्य गराउने गरेको पाइन्छ।
- हिरासत वा चौकीको फोहर वढार्न लगाउने, चर्पीमा पानी हाल्न तथा सफा गर्न लगाउने, प्रहरीले खाएका जुठा भाँडा, कप र गिलास माझ्न लगाउने, लुगा धुने, वारी वा वगैंचा खन्न, गोडमेल गर्न तथा पानी हाल्न लगाउने गरेको पाइन्छ।

(मानवअधिकार वर्ष पुस्तक १९९३ को अनुसूचीबाट सारांश साभार)

मानव अधिकार आयोगका सदस्य सुशील प्याकुरेलको "नेपालमा बेपत्ता पारिने समस्या र राष्ट्रिय मानवअधिकार आयोग" र कामदेव खनालको "बेपत्ता : नागरिक अधिकारको हनन" शीर्षकका लेखले पनि बेपत्ता पार्ने क्रम अझ बढ्दै गएको, त्यसले गर्दा बेपत्ता पारिने व्यक्तिलाई दिइएको हुनसक्ने यातना र बेखबर हुँदै परिवारजनले भोग्नु परेको मानसिक यातनाका बारेमा चिन्ता व्यक्त गरिएको छ।

वर्ष ११, पूर्णाङ्क ४५ यातना क्षतिपूर्तिसम्बन्धी कानुनमा सुधारको आवश्यकता शीर्षकमा श्याम महर्जनले तयार गर्नु भएको लेख प्रकाशित भएको छ। उक्त लेखमा विद्यमान कानुनमा देखिएका कमी कमजोरी र सुधार्नुपर्ने पक्ष बारेमा उल्लेख गरिएको छ।

वर्ष १२, पूर्णाङ्क ४६ मा अधिकार अनुगमन स्तम्भमा "यातना तथा अन्य क्रूर, अमानवीय र अपमानजनक व्यवहार वा दण्ड विरुद्धको महासन्धि र नेपाल" शीर्षकमा रञ्जना थापाद्वारा लिखित लेखमा उक्त महासन्धिमा भएको व्यवस्था र नेपालको सन्धिको पक्षराष्ट्रको हैसियतले पेश गरेको प्रतिवेदनको बारेमा खुलाइएको छ।

उक्त लेखको निष्कर्षमा भनिएको छ- नेपालले यातना विरुद्धको महासन्धिमा सम्मिलन जनाएर मानव अधिकारको संरक्षण र सम्बर्द्धनमा अन्तर्राष्ट्रिय रुपमा प्रतिबद्धता जनाएको छ। यातना विरुद्धको महासन्धिको धारा १९ अनुसार प्रत्येक चार वर्षमा पूरक प्रतिवेदन पठाउनु पर्ने दायित्वलाई पूरा गर्नु आवश्यक छ। हालसम्म यातना विरुद्धको महासन्धि अन्तर्गत बुझाउनुपर्ने दुईवटा पूरक प्रतिवेदन बुझाउन बाँकी छ भने सन् २००४ मा तेस्रो प्रतिवेदन पठाउने समयावधि पनि आइसकेको छ। यसर्थ, नेपालले उक्त समयमा पहिलो र दोस्रो (आवधिक) पूरक प्रतिवेदनसमेत तेस्रो पूरक प्रतिवेदनमा समावेश गरी समितिमा पठाउनु सान्दर्भिक देखिन्छ। यस सम्बन्धमा प्रतिवेदन तयार गर्न तोकिएको मन्त्रालय- गृह मन्त्रालयले आफ्नो स्रोत र साधनको पर्याप्त प्रयोग गरी प्रतिवेदन तयार गर्ने र उक्त प्रतिवेदनमा यथासम्भव सम्पूर्ण तथ्यांक, सरकारले गरेका सकारात्मक प्रयास कानुनी, प्रशासनिक पहल एवम् अन्य कुराहरु समावेश गरी पेश गर्नु आजको आवश्यकता हो।

निष्पक्ष, स्वतन्त्र अनुसन्धान पद्धतिको परिपालन र नियमित गर्न श्री ५ को सरकार कुनै पनि समयमा तयार रहेको र कुनै पक्ष, व्यक्तिबाट यातनाको उजुरी लिएर आएमा राज्यका न्यायिक, अर्धन्यायिक अथवा प्रशासनिक अंगले जाँचबुझ गर्न सक्ने व्यवस्था रहेको उल्लेख उक्त प्रतिवेदनमा गरिएको छ।

नेपालले सन् १९९३ मा पेश गरेको प्रारम्भिक प्रतिवेदनको बारेमा समितिले सन् १९९४ मा निष्कर्ष र सुझावहरु पठाएको थियो। उक्त समितिले पठाएको निष्कर्ष र सुझावहरु यस प्रकार छन् :

१. नेपालले प्रतिवेदन मार्ग निर्देशन अनुसार नबनाएको,
२. आवश्यक तथ्य तथ्यांकहरु उल्लेख नभएको,
३. कारागारमा रहेका कैदी तथा शरण खोज्नेहरुमाथि भएका प्रहरी दुर्व्यवहार, ज्यादतीको बारेमा गैरसरकारी संस्थाहरुबाट सूचना प्राप्त भएको तर त्यस्तो कार्य गर्ने अधिकारीहरुमाथि कारवाही चलाएको प्रमाण नपाएको,
४. पूरक प्रतिवेदन पठाउँदा निर्देशिका अनुसार प्रतिवेदन बनाउनु पर्ने,
५. यातनालाई महासन्धिको परिभाषा अनुरुप परिभाषित गरी राष्ट्रिय कानुन बनाउनु पर्ने, साथै उचित क्षतिपूर्तिको व्यवस्था गरिनु पर्ने,
६. प्रहरी अधिकृत, अधिकारी तथा सीमा क्षेत्रका प्रहरी, सुरक्षाकर्मीहरुलाई केन्द्रित गर्दै शिक्षा तथा अन्य विविध कार्यक्रमहरु निर्माण एवम् लागू गरिनु पर्ने।

यसरी प्राचीमा यातनासम्बन्धी सामाग्री प्रकाशन भइरहेकै अवस्थामा यातनाविरुद्ध क्षतिपूर्ति ऐन २०५३ पनि जारी भएको छ। यस ऐनअनुसार यातना पीडितलाई क्षतिपूर्ति दिनुपर्ने फैसलाहरु पनि अदालतबाट हुन थालेका छन्। तर, पीडित वा पीडितका परिवारले क्षतिपूर्ति बापत पाउनुपर्ने रकम सजिलै पाउन सकिरहेका छैनन्। कतिपय पीडितले न्याय पाउन नसकेको गुनासो पनि बारम्बार आइरहेको छन्। दमन र यातनाबाट मात्र समस्या समाधान हुँदो रहेनछ। यसले समस्या विकराल बनाउँदो रहेछ भन्ने कुरा प्राचीले समेटेको रोल्पामा भएका यातनाका घटना र त्यसपछिको रोल्पाको स्थितिबाटै प्रष्ट हुन्छ। तर पनि यातनाको गम्भीर स्वरुप बेपत्ता पार्ने घटनामा बढोत्तरी भइरहेको तथ्य मानवअधिकार वर्ष पुस्तकहरुले औंल्याइरहेका छन्। मानवअधिकारको पालना गर्दै राज्यबाट यातना दिने काम नहोस् र प्राचीले फेरि यातना बारेमा लेख्नु नपरोस्, राज्य पक्षले सोच्नै पर्छ।

●




**पीडित वा पीडितका परिवारले क्षतिपूर्ति बापत पाउनुपर्ने रकम सजिलै पाउन सकिरहेका छैनन्। कतिपय पीडितले न्याय पाउन नसकेको गुनासो पनि बारम्बार आइरहेको छन्। दमन र यातनाबाट मात्र समस्या समाधान हुँदो रहेनछ। यसले समस्या विकराल बनाउँदो रहेछ भन्ने कुरा प्राचीले समेटेको रोल्पामा भएका यातनाका घटना र त्यसपछिको रोल्पाको स्थितिबाटै प्रष्ट हुन्छ।**

## ४९ अंक

# प्राचीको अडान

– प्रकाश ज्ञवाली

सामाजिक परिवर्तन र प्रगतिशील विचारधाराको प्रचार-प्रसार गर्ने मुख्य उद्देश्यका साथ प्रकाशन आरम्भ गरिएको प्राचीले ४९ अंक पार गरिसकेको छ। प्रजातन्त्र, मानवअधिकार र सामाजिक न्यायको लागि निरन्तररुपमा आफ्नो क्षेत्रबाट योगदान पुऱ्याउँदै आएको प्राचीले शुरुदेखि नै आफ्नो अडान र मान्यतालाई जुझारु एवम् स्पष्टरुपमा अगाडि सार्दै आएको छ।

"प्राची साहित्यिक संकलन त्यसबेला प्रगतिशील साहित्यको क्षेत्रमा संकल्पबद्ध र संघर्षरत युवा समुदायको प्रकाशन मानिन्थ्यो। अराजकतावाद र आतंकवादलाई क्रान्तिकारी मान्ने एकपक्ष र कोरा आदर्श अनि भावुकतालाई प्रगतिशीलता ठान्ने अर्को पक्षका बीचमा सही जनपक्षीय साहित्यको पक्षपोषण गर्न प्राचीले दृढ र अप्ठेरो कदम चाल्नु परेको थियो।" ०४९ भदौ-असोजमा नयाँ शैली र नियमित रुपमा प्रकाशन थालिएको पहिलो अंकमा उल्लेख गरिएको छ। अथक मानवअधिकार योद्धा स्व. प्रकाश काफ्लेले निर्देशन गर्नुभएको मार्ग पच्छ्याउँदै त्यसमा अविचलित ढंगले अगाडि बढ्ने प्रणका साथ पहिलो अंकको सम्पादकीयमा उल्लेख गरिएको छ- म्याक्सिम गोर्कीले कुनै ठाउँ भनेका छन्, "आजभन्दा अढाई हजार वर्ष अगाडि जुन मुर्दाको दर्शनले सिद्धार्थलाई बुद्ध बनाएको थियो, त्यो मुर्दा के साँच्चै निर्जिव थियो ? त्यो मुर्दा थिएन, त्यो त कपिलवस्तुका हज्जारौं प्राणीहरुभन्दा सजिव थियो।" प्रकाश काफ्ले पनि भौतिक रुपमा निर्जिव हुनु भएको छ तथापि आफ्ना किर्तिहरुमा उहाँ हाँसिरहनु भएको हामी देख्नेछौं। हामीले केवल उहाँले छोडेर जानु भएका ज्यावलद्वारा उहाँले बाँकी राखिदिनुभएको रोडा फुटाउन थाल्नु पर्दछ। हामी उहाँका सहयोद्धाहरुले यतिखेर यही प्रण गर्नुपरेको छ।

प्रजातन्त्र र मानवअधिकारलाई एकै सिक्काका दुई पाटा ठानिन्छ। तर, प्रजातन्त्र पुनर्स्थापनापछि मानवअधिकारकै सवाललाई जोडतोडले उठाएर सत्तामा पुगेको जननिर्वाचित सरकारले नै मानवअधिकारप्रति देखाएको उदासिनताप्रति प्राचीले चिन्ता व्यक्त गरेको थियो। प्राचीको ०४९ कार्तिक-मंसिर अंकमा "सन्दर्भः विश्व मानवअधिकार घोषणा दिवस, मानवअधिकारलाई गौण ठान्ने चिन्ताजनक प्रवृत्तिको शुरुवात" शीर्षक रहेको सम्पादकीयमा उल्लेख गरिएको थियो, "विषम धरातलका दुई चिजहरुबीच तुलनै हुन सक्दैन। पञ्चायतकालमा हुने गरेका मानवअधिकारका भाषणहरुलाई आजको अवस्थासँग दाँजेर मूल्यांकन गर्न मिल्दैन। अनि आजको अवस्थालाई आजकै परिप्रेक्ष्यमा हेर्दा सबै कोणका मानवअधिकार कार्यकर्ताहरुलाई भन्न कर लागेको छ- सरकारद्वारा मानवअधिकारको सवाललाई गौण ठान्ने चिन्ताजनक प्रवृत्तिको शुरुवात भएको छ।" नियमित प्रकाशनको तेश्रो अंकमा प्राचीले शहीद सप्ताहले दिएको सन्देश बोकेको थियो। दण्डहीनताको संस्कृतिप्रति औंला ठड्याउँदै उक्त अंकमा भनिएको थियो- "जनता शक्तिशाली भएर












प्रजातन्त्र कहिल्यै खतरामा पर्दैन, बरु जनआवाजको कदर नगर्ने बानी बसेपछि निर्वाचित सरकार पनि निरंकुश बन्न पुग्दछ।" सरकारलाई मानवअधिकारप्रति संवेदनशील हुन आग्रह गर्दै प्राचीको फागुन-साउन, ०४९/५० को अंकमा सामाजिक आर्थिक अधिकार, दण्डहीनता तथा विपत्तिका बेलाको दायित्वका सम्बन्धमा सरकारलाई झक्झकाइएको थियो, मानवअधिकारलाई व्यवहारमा उतार्न सरकारी इच्छाशक्ति हुनुपर्ने कुरामा जोड दिइएको थियो।

सरकारी पदाधिकारीले नै मानवअधिकार कार्यकर्तामाथि दुर्व्यवहार गरेको प्रसंग कोट्याउँदै प्राचीको भदौ-असोज, ०५० को अंकमा "समयलाई चिन्न नचाहने प्रशासकहरु" शीर्षकमा सम्पादकीय प्रकाशन गरिएको थियो। सरकारी निकायका पदाधिकारीहरुलाई मानवअधिकार शिक्षाको आवश्यकता वोध गरिएको सो सम्पादकीयमा प्रशासकहरुले बदलिएको समयलाई चिन्न नसकेको तथ्य औंल्याइएको थियो। "आफ्ना प्रशासकहरुलाई वर्तमान सरकारले अझै पनि समय चिनाउने काम गर्न सकेन भने प्रजातन्त्र कुँजो हुन पुग्नेछ, मानवअधिकार भाषणको विषयमात्र बन्न पुग्नेछ" सम्पादकीयमा भनिएको थियो। मानवअधिकार हननको ज्वलन्त समस्याका रुपमा रहेको मानिसलाई बेपत्ता पार्ने क्रम पञ्चायती व्यवस्थामा त तीब्र थियो नै। बहुदलीय व्यवस्थाको पुनर्स्थापनापश्चात् पनि यस्ता घटनाहरु भइ नै रहे। त्यस्तो अवस्थामा प्राचीले आफ्नो धारणा स्पष्ट गरेको थियो र त्यस्ता मानिसहरुका बारेमा सरकारले तत्काल जनसमक्ष जानकारी गराउनु पर्ने माग राखेको थियो। कार्तिक-मंसिर ०५० को प्राचीको उक्त अंकको सम्पादकीय शीर्षक थियो- "बेपत्ता पारिएका मानिसहरुको खोजी गरौं"।

सरकारले प्रतिनिधि सभा विघटन गरेको घटनाप्रति असहमति जनाउँदै प्राचीको साउन-०५१ को अंकमा, त्यसबाट जननिर्वाचित व्यक्तिको घात भएको निष्कर्ष निकालिएको थियो। प्रतिनिधिसभाको विघटनले प्रजातन्त्रको स्थायित्वमाथि नै प्रश्न उठेको तथ्य औंल्याउँदै यसबाट प्रजातन्त्रको उपहास भएको ठहर गरिएको थियो। मध्यावधी निर्वाचनपश्चात् कुनै पनि राजनीतिक पार्टीले संसदमा स्पष्ट बहुमत ल्याउन नसकेको अवस्थामा अल्पमतको सरकारले शासनसत्ता सम्हालेको थियो। त्यसबखत प्रकाशित प्राचीको वैशाख-जेठ ०५२ को अंकमा, मानवअधिकारका दिशामा अगाडि बढ्न सरकारलाई सुझाव दिइएको थियो। विगतबाट पाठ सिक्नुपर्ने र जनताको अधिकार वहालीलाई सर्वोपरी ठान्दै आफ्नो घोषणापत्रमा उल्लेख गरिएका सवालहरुको कार्यान्वयनमा लाग्नुपर्ने कुरामा प्राचीले झक्झकाएको थियो। देशमा माओवादी "जनयुद्ध" शुरु भएको ६ महिना बित्दा-नबित्दै प्राचीले त्यससम्बन्धमा रोल्पा र रुकुम जिल्लाको स्थलगत अध्ययन समावेश गरेको थियो। उक्त अंकमा "सातसालदेखि बाउन्नसम्मका सशस्त्र संघर्षहरु" शीर्षकमा प्राचीको सम्पादकीय केन्द्रित थियो र समयमै यसको राजनीतिक समाधान पहिल्याउन नसके समस्या अझ भयावह हुनेतर्फ सम्बन्धित पक्षहरुको ध्यानाकर्षण गरिएको थियो। खासगरी विकासोन्मुख देशहरुले उठाउँदै आएको मुद्दा, खाद्य सुरक्षाका सवालमा पनि प्राची बोलेको छ। "प्रतिबद्धतालाई गिज्याउँदैछ दरिद्रता" शीर्षकमा कार्तिक-मंसिर ०५३ को अंकमा छापिएको प्राचीको कसी यसै विषयमा केन्द्रित थियो। संसदमा देखिएको पजेरो संस्कृति र त्यसले निम्त्याएको प्रायश्चितमाथि पनि प्राचीले टिप्पणी उठाएको छ। पुस-माघ, ०५३ को अंकमा निष्कर्ष निकालिएको छ- "नेताहरुमा आदर्श हामीले खोजेको चिज हो। पजेरो दौड राजनीतिकर्मीहरुमा हामीले खोजेको आदर्शभन्दा विपरीत छ। र, त्यसैले गलत ढंगले सुविधा खोज्ने विधायकहरु पनि पजेरोको प्रायश्चित गर्ने मनस्थितिमा छन् भने स्वागतयोग्य कुरा हो।"

मानवअधिकारको विश्वव्यापी घोषणापत्र जारी भएको पचासौं वर्षको अवसरमा प्राचीको माघ-फागुन ०५४ को अंकमा "सर्वाधिक महत्वको दस्तावेज" शीर्षकमा मानव गरिमाको रक्षार्थ घोषणापत्रको मूल मर्मलाई अझै उजागर

गर्नुपर्ने कुरामा जोड दिँदै यसको व्यवहारिक प्रतिबद्धताको समीक्षा गर्नुपर्ने खाँचो औंल्याइएको थियो। चैत, बैशाख र जेठ ०५४/५५ को प्राचीको पूर्णांक २२ जनआन्दोलन स्मृति विशेषका रुपमा प्रकाशित भएको थियो। उत्सर्गको गाथा शीर्षकको सम्पादकीय रहेको उक्त प्राचीमा आव्हान गरिएको थियो- "जनआन्दोलनले स्थापित गरेका आदर्शको आगोलाई सुरक्षा गरौं, जोगाऔं। वलिदानको यो विरासतलाई, प्रजातन्त्र स्थापनाको निम्ति भएको उत्सर्गको गाथालाई पुस्तौंपुस्ता हस्तान्तरण गर्दै जाऔं।" राजनीति र मानवअधिकारको अन्तर्सम्बन्धका बारेमा प्राचीले आफ्नो स्पष्ट धारणा राखेको छ- पूर्णांक २४ मा। राजनीतिक शुद्धता र प्रतिबद्धताबेगर न मानवअधिकारको सम्मान हुन्छ, न प्रजातन्त्रकै संरक्षण हुन्छ भन्ने कुरालाई प्राचीको यो अंकमा जोड दिइएको छ। प्राचीको पच्चीसौं अंकमा आफ्नै यात्राको बारेमा प्राचीको सम्पादकीय केन्द्रित छ। पच्चीसौं अंकसम्म पार गरेका घुम्ती र मोडहरुको बारेमा उल्लेख गरिएको छ।

प्राचीको पूर्णांक २३ मा कहिल्यै ननिभ्ने प्रकाश शीर्षकमा अथक मानवअधिकार योद्धा स्व. प्रकाश काफ्लेको सम्झनामा समर्पित सम्पादकीय छ। सम्पादकीयमा हामी उहाँलाई देवताको रुपमा होइन एउटा मार्गदर्शक, जीवन्त द्रष्टा र कर्मशील मान्छेका रुपमा श्रद्धा गर्छौं। प्राचीको साउन ०५६ को अंकमा पनि प्रकाश काफ्लेकै स्मृतिमा सम्पादकीय लेखिएको छ।

प्राचीको २७ औं अंकमा बाँधा, कमैया र हरुवा-चरुवाहरुको सवालमा सरकारी बेवास्ताको आलोचना गरिएको छ। प्राचीको २९ औं अंकमा "तब मालिकहरुको साम्राज्यमा भूईंचालो जान कसले रोक्न सक्छ?" शीर्षकमा र ३० औं अंकमा "जारी रहनुपर्छ आन्दोलन भोलिका दिनहरुमा पनि" शीर्षकमा कमैया मुक्तिको सवाललाई अगाडि सारिएको छ। प्राचीको २८ औं अंक शहीद विशेष अंकका रुपमा प्रकाशित छ जसमा राजनीतिक हत्याको सवाललाई उठाइएको छ। साहित्यिक क्षेत्रबाट उठाइएका मानवअधिकारका सवालहरुमा केन्द्रित भएर प्राचीको पूर्णांक ३१ नेपाली साहित्य र मानवअधिकार विशेषांकका रुपमा प्रकाशित छ। "दिवंगत भएको छैन मानवअधिकारको तिर्सना" शीर्षक रहेको उक्त अंकको सम्पादकीयमा वरिष्ठ साहित्यकारहरुले आफ्ना साहित्यिक कृतिहरुमार्फत् कसरी मानवअधिकारको सन्देश दिनुभएको छ भन्ने कुरा उजागर गर्दै उल्लेख गरिएको छ, "प्राचीको प्रस्तुत अंक दिवंगत तिनै स्रष्टाहरुमा समर्पित छ- जसको सिर्जना दिवंगत भएको छैन र जसको सिर्जनामा अभिव्यक्त मानवअधिकारको तिर्सना पनि दिवंगत भएको छैन। तिनका तिर्सना तृप्त पार्ने मुहानको खोजीमा लागिरहनेछ प्राची निरन्तर। निरन्तर।"

मंसिर ०५७ को अंकमा विश्वभर महिलाहरुले भोग्नुपरेको अत्याचारका प्रकृतिबारे चर्चा गरिएको सम्पादकीय लेखिएको छ जसले महिला मुक्ति आन्दोलनलाई झकझकाउने काम गरेको छ। "मौनता मृत्यु हो/तिमी बोल्छौ भने मारिन्छौं/नबोल्दा पनि मारिन्छौ तसर्थ,/ बोल र मृत्यु स्वीकार गर।" अल्जेरियन कवि ताहर जाउतको कविताको अंक उक्त सम्पादकीयमा समावेश गरिएको छ। प्राचीको पूर्णांक ३३ मा बेपत्ता पारिएकाहरुको सवाललाई उठाइएको छ भने पूर्णांक ३५ मा सरकार र माओवादी हिंसाका कारण उत्पन्न स्थितिलाई।

साउन ०५८ को अंकमा देशमा शान्तिको अपरिहार्यताबारे चर्चा गर्दै त्यसका लागि मानवअधिकार संस्थाहरुको दायित्वबारे उल्लेख गरिएको छ भने सोही वर्षको असोजको अंकमा "आतंकवाद चाहिँदैन, युद्धको विभिषिका चाहिँदैन" शीर्षकमा सम्पादकीय लेखिएको छ। उक्त सम्पादकीयमा अमेरिकामा भएको आतंकवादी हमला र आतंकवाद नियन्त्रणका नाममा अमेरिकी कदमबारे टिप्पणी गरिएको थियो। प्राचीको ४० औं अंकमा "यस्ता कारवाही बन्द गरियोस्" शीर्षकको सम्पादकीयमा औंल्याइएको छ- "राजनीतिक-रणनीतिक स्वार्थपूर्तिको सवालमा आम जनतालाई ढाल बनाउनु, भजाउनु र पिस्नु, तिनको हितमाथि प्रहार

















गर्नु र तिनको भविष्यमा पूर्णविराम लगाउनु राजनीति होइन क्षुद्र खेल मात्र हो। यो खेलको जनराजनीतिसँग कुनै साइनो रहँदैन।" त्यसैगरी ४१ औं अंक संकटकालको पहिलो अध्याय समाप्त भएपछि प्रकाशन गरिएको थियो जसमा देश कसरी अगाडि बढ्ला? भन्ने शीर्षकमा हिंसा र प्रतिहिंसाको चक्करले गर्दा संकटकालीन अवस्था नेपालको इतिहासमा कालो अध्यायको रुपमा दर्ता भइसकेको उल्लेख गरिएको छ। "किन काँप्दैनन् कसैका हात?" शीर्षकमा प्राचीको ४२ औं अंकमा प्रकाशित सम्पादकीयमा कलमजीवीहरुलाई शिकार बनाउने क्रियाकलापको विरोध गरिएको छ।

मंसिर-पुस ०५९ को अंक ४४ मा "जनताको चाहना: शान्ति स्थापना" शीर्षकमा प्रकाशित सम्पादकीयमा भनिएको छ- "हामी शान्ति स्थापनाका लागि संघर्षरत छौं। गोला, बारुद र विस्फोटनको बीचबाट शान्तिकामी परेवा उडाउनु निश्चय पनि कठिन छ। जनताको अधिकार कुण्ठित गर्ने वा त्यसको हनन गर्ने अधिकार कसैलाई पनि छैन र त्यसो हुनु पनि हुँदैन। जनतालाई सिंढी बनाएर माथि उक्लन चाहने जो कोहीले पनि उनीहरुको अधिकारमाथि धावा बोल्नु आफ्नै खुट्टामा बञ्चरो हान्नुजस्तो हो भन्नु अत्युक्ति नहोला।"

सरकार-माओवादीबीच युद्धविराम भएपछि प्रकाशित प्राचीको ४५ औं अंकमा दिगो शान्तिको कामना शीर्षकमा युद्धविरामलाई सकारात्मक उपलब्धीका रुपमा लिंदै त्यसबीचका प्रकृयागत सवालहरु भने शंकारहित नभएको तथ्य औंल्याउनुका साथै शान्ति प्रकृयाको पारदर्शीतामा जोड दिइएको थियो। त्यसैगरी ४६ औं अंकमा पाँच राजनीतिक दलहरुले संचालन गरेको जनआन्दोलन र जारी सरकार-माओवादी वार्ताको विषयमा सम्पादकीय केन्द्रित गरिएको। विगतमा शान्तिपूर्ण आन्दोलन र स्थितिलाई भड्काउने कार्यमा सरकारी निकाय नै सक्रिय भएको तथ्य नछिपेको उल्लेख गर्दै विपक्षीहरुका सकारात्मक एजेण्डा बेवास्ता गरेर उल्टै दमनमा उत्रने शैलीका कारण देशले थप समस्या भोग्नु परेको कुराप्रति सबै पक्षले ध्यान दिनुपर्ने कुरामा उक्त सम्पादकीयमा जोड दिइएको थियो। मानवअधिकारप्रति द्वन्द्वरत पक्षहरु इमान्दार नहुञ्जेल शान्ति वहाली सहज हुन नसक्ने बताउँदै सम्पादकीयमा उल्लेख गरिएको थियो- "आधारभूत तहका जनताका सवालहरुलाई सूत्रबद्ध गरेर उनीहरुको अधिकार वहालीतर्फ अग्रसर हुन सकेमा मात्र सकारात्मक शान्ति स्थापित हुन सक्दछ।" प्राचीको ४७ औं अंकको सम्पादकीय बालश्रम शोषणका बारेमा लेखिएको छ। सरकारी, गैरसरकारी तथा वैयक्तिक, सम्पूर्ण प्रयासहरुको पहिलो प्राथमिकता र केन्द्रविन्दू बालबालिका हुनुपर्दछ र कुनै पनि वहाना वा अवस्थामा उनीहरुको अधिकार हनन हुनुहुँदैन भन्ने मान्यता दोहोऱ्याइएको सो सम्पादकीयमा भनिएको छ- "बालश्रम वाध्यताको उपज भएको छ- कतिपय क्षेत्रमा। जबसम्म हामीले यस्तो वाध्यता सृजना गर्ने कारकतत्वहरु निर्मूलनमा सफलता प्राप्त गर्न सक्दैनौं, समस्या बढ्दो क्रममै रहनेछ।"

प्राचीको ४८ औं अंकमा महिला अधिकारको विषय उठाइएको छ। विभेद विकासको वाधक हो। जबसम्म सामाजिक, आर्थिक, लैंगिकलगायत् विभेदका रुपहरुको अन्त्य हुँदैन, तबसम्म राष्ट्रिय विकास केवल नारामा सीमित रहिरहन्छ। त्यसमाथि, नागरिकहरुबीच लिंगका आधारमा विभेदको खाडल सृजना गरिएको अवस्थामा विकासका पूर्वाधारहरु कसरी खडा हुन सक्लान्? यस्तो अवस्थामा विकासको परिकल्पना कत्तिको साकार हुन पुग्ला? सम्पादकीयमा प्रश्नहरु उठाइएको छ।

प्राचीले खासखास बेलामा विशेष सम्पादकीयमार्फत् आफ्नो अडान र दृष्टिकोण अगाडि सार्ने गरेको छ। जेठ ०५८ को प्राची राजदरबार हत्याकाण्डका बारेमा केन्द्रित छ। उक्त अंकमा समावेश गरिएको विशेष सम्पादकीयमा दरबार हत्याकाण्डलाई अत्यन्त दु:खदायी र अत्यन्त निर्मम घटनाको रुपमा लिंदै भनिएको छ- "त्यस घटनाले शान्तिप्रिय तथा कोमल हृदयका नेपाली जनतालाई यतिविघ्न स्तब्ध र यतिविघ्न सन्त्रस्त बनाएको छ कि, त्यसको मानसिक असरबाट मुक्त हुन जनतालाई धेरै समय लाग्नेछ।" सम्पादकीयमा उक्त हत्याकाण्डको छानबिन

प्रतिवेदनले राजनीतिक तथा सामाजिक वृत्तमा विश्वसनियता आर्जन गर्न नसकेको तथ्य उजागर गर्दै फितलो सुरक्षा संयन्त्र र सरकारी व्यवहारको आलोचना गरिएको छ। अर्को विशेष सम्पादकीय प्राचीको ३८ र ३९ औं संयुक्तांकमा प्रकाशित छ। देशमा संकटकाल लागेपछिको सो अंकमा भनिएको थियो- "सरकार, प्रतिपक्षी पार्टीहरु, मानवअधिकार संस्थाहरु, नागरिक समाज र हामी सारा शान्तिकामी नेपालीले माओवादीहरुको हिंसाप्रेमलाई औंल्याएर मात्र मुक्ति पाउन सक्दैनौं। नेपाली धर्तीमा शान्तिको स्थापनाका निम्ति चालिनुपर्ने कदमहरुको कार्यसूचीमा केवल जंगली कारवाहीलाई दर्ज गरेर हामी दीर्घकालीन शान्तिको बाटो खोल्न सक्दैनौं।" ०५९ असोज-कार्तिकको प्राचीको ४३ औं अंकमा पनि विशेष सम्पादकीय प्रकाशित छ। "संकटकालपछिको संकट" शीर्षकको उक्त सम्पादकीयमा ०५९ असोज १८ को शाही कदमको विश्लेषण गरिएको छ र भनिएको छ- "यो बेलामा हामीले धेरैको बलिदान र तीन दशकको संघर्षबाट पाएको प्रजातन्त्रको सारलाई कसरी जीवित राख्न सक्छौं भन्ने कुरा ठूलो चिन्ताको विषय बनेको छ।" प्राचीको ४९ औं अंकको विशेष सम्पादकीय जोखिममा परेका मानवअधिकार रक्षकहरुको सवालमा केन्द्रित छ। "शान्ति शब्दमात्र होइन सम्पूर्ण व्यवहार हो। यसर्थ, शान्ति सबै सिद्धान्तहरुको आधार पनि हो। शान्तिको कुरा गर्दा त्यसभित्र सामाजिक न्याय, नागरिक स्वतन्त्रता, नागरिक हकका कुराहरु गाँसिएर आउँछन्। हाम्रो शान्ति अभियानले जनताको नेतृत्व र स्वामित्वलाई पथप्रदर्शक सिद्धान्तको रुपमा अंगिकार गरेको छ।" सम्पादकीयमा उल्लेख गरिएको छ।

यसरी प्राचीले मानवअधिकार तथा प्रजातान्त्रिक मूल्य र मान्यताहरुलाई आत्मसात गर्न र व्यवहारमा मानवअधिकार अनुभूत हुनसक्ने स्थितिको स्थापना गर्न सम्बन्धित पक्षहरुलाई झकझकाएको छ। यसले केवल उपदेश मात्र दिएको छैन, मानवअधिकार संस्कृतिको स्थापनाका लागि साँच्चिकै सुस्पष्ट दृष्टिकोण प्रस्तुत गरेको छ।










**प्राचीले खासखास बेलामा विशेष सम्पादकीयमार्फत् आफ्नो अडान र दृष्टिकोण अगाडि सार्ने गरेको छ। जेठ ०५८ को प्राची राजदरबार हत्याकाण्डका बारेमा केन्द्रित थियो। उक्त अंकमा समावेश गरिएको विशेष सम्पादकीयमा दरबार हत्याकाण्डलाई अत्यन्त दुःखदायी र अत्यन्त निर्मम घटनाको रूपमा लिंदै भनिएको छ- 'त्यस घटनाले शान्तिप्रिय तथा कोमल हृदयका नेपाली जनतालाई यतिविघ्न स्तब्ध र यतिविघ्न सन्त्रस्त बनाएको छ कि, त्यसको मानसिक असरबाट मुक्त हुन जनतालाई धेरै समय लाग्नेछ।' सम्पादकीयमा उक्त हत्याकाण्डको छानबिन प्रतिवेदनले राजनीतिक तथा सामाजिक वृत्तमा विश्वसनियता आर्जन गर्न नसकेको तथ्य उजागर गर्दै फितलो सुरक्षा संयन्त्र र सरकारी व्यवहारको आलोचना गरिएको छ।**

# प्राची र साहित्य

— आभास शर्मा

"नेपालमा संगठित मानवअधिकार आन्दोलनको थालनी हुनु भन्दा धेरै अगाडिदेखि साहित्यकारहरुले मानव अधिकारसंग सम्बन्धित सवाललाई उठाउदै आएको यथार्थ हाम्रो सामु छ। न्याय, समानता, प्रजातन्त्र एवं राष्ट्रियताको पक्षमा संचालित साहित्यिक आन्दोलनको रुपमा एउटा मानवअधिकार आन्दोलनको रुपमा रहेको कुरालाई स्वीकार गर्नै पर्छ।" *(शार्दूल भट्टराई, प्राची पूर्णाङ्क ३१)*

"मानवअधिकार भनेको मनुष्यलाई उसको आत्मप्रतिष्ठा र आत्मसुरक्षाका साथ सम्मानपूर्वक जीवन व्यतित गर्न पाउने भौतिक अधिकार हो। साहित्यको मूल आदर्श पनि त्यही मानिसलाई दरिद्रता, अशिक्षा, दमन, तिरस्कार आदिबाट मुक्त हुने चेतना दिएर प्रतिष्ठापूर्ण जीवनको स्थान दिलाउनु हो। र, मनुष्यको व्यक्तित्वको सर्वाङ्गिण विकास गर्ने चेतना दिलाउनु हो। साहित्यकारका युद्ध पनि मानवअधिकारको लागि हुने युद्धको एक अभिन्न अंग हो।" *(गोविन्द भट्ट, प्राची पूर्णाङ्क ३१)*

"विश्व साहित्यको सन्दर्भ हेर्दा जबदेखि साहित्य लेखनको सुरुवात भयो मानवअधिकार बारे त्यतिखेर देखि नै लेखेको पाइन्छ। त्यसो त कुनै पनि लेखक मानवअधिकारविरुद्ध जान सक्दैन। नेपाली साहित्यमा मानवअधिकार विरुद्ध लेखकहरु जान नसक्ने लेखकीय धर्म नै बनिसकेको छ। जनतालाई मानवअधिकार विरोधी साहित्यको माध्यम ठीक मात्र होइन दिगो पनि हुन सक्छ।" *(ध्रुवचन्द्र गौतम, प्राची पूर्णाङ्क ३१)*

त्यसकारण प्राचीमा साहित्यले महत्वपूर्ण स्थान पाएको छ। यस क्रममा प्राचीको अङ्क ३१ "साहित्य र मानवअधिकार" विशेषाङ्कको रुपमा प्रकाशित छ। सामग्री चयन र विषयको छनौटको दृष्टिकोणले यो अङ्क आफैमा परिपूर्ण छ।

**प्राचीका कथाहरु**

कथामा रहने चाखलाग्दो कथ्य तथा पात्र, विविध परिवेश र मानव जीवनको नौलो-नौलो चित्रणका कारण, कथा साहित्यको सबैभन्दा आकर्षक एवम् सशक्त विधा मानिन्छ। स-साना बालबालिकादेखि बृद्धसम्म, सामान्य पाठकमात्रै होइन, विद्वत्वर्गसमेतले सजिलै बुझ्ने भएकाले कथा विधा लोकप्रिय पनि छ। त्यसकारण प्राचीमा यो विधा उपस्थित छ- कथा औ लघुकथाका रुपमा। अनि अनुदित कथाले पनि यथोचित सम्मान पाएको छ चाहे त्यो तोल्सतोयको होस् वा नरेन्द्रप्रताप सिंहको कथा। आधुनिक नेपाली कथाकारको अघिल्लो पुस्ताको प्रतिधित्व रमेश विकलको कथामात्रै होइन पछिल्लो पुस्ताका विजय चालिसेका रचनालाई पनि प्राचीले समेटेको छ।

छयालीस सालपछिको खुला परिवेशमा नेपाली जनताका लुप्त आकांक्षा सतहमा देखा परेता पनि तीप्रति संस्थापन पक्षको उदासीननालाई राजनीतिककर्मीले गम्भीरतापूर्वक लिएनन्। तर, नेपाली साहित्यकारले त्यस्ता विषयलाई उपेक्षा गरेनन्। बरु आफ्ना रचनामार्फत् सबैको चेतनालाई ब्युँझाउन अघि सरे। प्रजातन्त्र जनआकांक्षाअनुरुप नभएको आमनिर्वाचनको लगत्तै अनुभव हुन थालेको थियो। राजनीतिक दलहरुले आफूखुशी प्रजानन्त्रको उपयोग गर्न थालेका थिए। यसरी नै मुलुकमा नयाँ प्रजातन्त्रको अभ्यास नयां तरिकाबाट अघि बढ्यो। र सबै दलहरुले आ-आफ्नै किसिमबाट त्यसलाई उपयोग गरे (नारायण ढकाल, प्रजातन्त्रको उपयोग, प्राची अङ्क १)। ०४९ प्राची अंक ३-५ मा कथाकार ढकालको अर्को कथा प्रकाशित छ- शासन कला, जसमा पंचायतकालीन स्थानीय नेताको "कला" देखाइएको छ। त्यस्तै कलाले पंचायती व्यवस्था चलेको थियो।

वहुदलीय व्यवस्था पुनर्स्थापना भएको दुई-तीन वर्षपछि नै नेताहरुको चारित्रिक स्खलनलाई साहित्यकारहरुले आँकेका थिए। नेताहरुको उपयोग मान्छे हँसाउने स्तरमा झर्‍यो (राजव, आजको वीरबल हँसाउने नेताहरु, अङ्क २)।

पंचायतकालका खाँटी पञ्च बहुदलीय व्यवस्थामा प्रजातन्त्रवादी भएकोमा व्यंग्य गर्दछन्, कथाकार खगेन्द्र संग्रौला। "मान्छे र सर्प" का विपिन तल्लोस्तरका चाकडिया पञ्च हुन् भने जङ्गबहादुरले सामन्तवादको प्रतिनिधित्व गर्छन् जो बदलिएको परिस्थितिमा मानवअधिकारवादी नेता भएका छन्। उसको चरित्र भने जस्ताको त्यस्तै छ- गरिब सोनामलाई आफ्नो कुकुरभन्दा माथ्लो दर्जामा राख्दैन। सोनामले जङ्गबहादुरको वास्तविकता बुझ्दछ। भनाई र गराईमा फरक व्यवहार गर्ने जङ्गबहादुरलाई सोझो सोनामले सर्प देख्छ,। उमाथि आक्रमण गर्छ।

विवश वस्तीको "टोल भित्रका" मानिसहरु पनि सहज जीवन बाँच्न नपाएपछि खलपात्र धनञ्जय साहुलाई आफै कारवाही गर्ने टुंगोमा पुगेका छन्। विधिको शासनप्रति नेपाली जनता ०४८-४९ सालतिर विश्वस्त हुन छाडिसकेका थिए। त्यसकारण विमल निभाको ठानालाई प्रहरी चौकीको रुपमा लिन सकिन्न। सिंगो मुलुकलाई एउटा ठाना को रुपमा हेर्नुपर्छ।

खगेन्द्र संग्रौलाको "बिहाभोज" मा दुई कम्युनिष्ट पात्रमध्येको चक्रप्रसादमा आएको परिवर्तनलाई उनकै छोरी मुनिताले यसरी दर्शाउछिन् "उबेला जहाँ पनि मेरा बुबाको सुनाम नै सुनाम सुनिन्थ्यो। अहिले जता कान थापेर सुन्नुहोस्, जहाँ पनि दुर्नाम नै दुर्नाम सुनिन्छ।" चक्रप्रसाद अहिले गाउँ-गाउँमा भेटिन्छन्। त्यसकारण पनि देविका तिमिल्सिना कमलालाई "अर्को उज्यालोको खोजी" मा लगाउन पुगेका छन्। तर लामो समयदेखि वाम राजनीतिमा सक्रिय रहेको "मेरो कथाको पात्र" मधुले पार्टी कार्यकर्ताको अधोपतन आफ्नै जीवनकालमा देखेको हुन्छ। उसको मृत्यु भएको ४५ दिनपछि उसकी छोरीको उपचारको अभावमा मृत्यु हुन्छ। कथामा इमान्दार मानिसको त्रासदीको चित्रण छ। मूल्यहीनताको संस्कृति बढेको, कथाले इङ्गित गरेको छ।

दासप्रथाको अवशेषको रुपमा रहेको कमैया प्रथा उन्मूलन गर्ने क्रममा इन्सेकले उल्लेखनीय भूमिका निर्वाह गरेको सर्वविदित छ। प्राचीको अङ्क २९ कमैया आन्दोलन विशेषाङ्कको रुपमा प्रकाशित छ। यसमा भारतका प्रसिद्ध साहित्यकार प्रेमचन्दको कथा "सवा सेर गहुँ" अनुदित छ। आधा शताब्दीभन्दा अगाडि लेखिएको यस कथाको

सान्दर्भिकता भने यथावत छ। नेपाल र भारत दुवै मुलुकका कमैयाको अवस्था मिल्दोजुल्दो छ। श्रम शोषणको रुप र स्तर समान छ। नेपालमा कमैया मुक्ति गरिएको वर्षौं बितिसक्दा पनि उनीहरुको जीवनस्तरमा कुनै सकारात्मक सुधार आउन सकेको छैन। हजारौं "रामजीवन" अलपत्र जीवन बाँच्न वाध्य छन् (समीर नेपाल, अङ्क ३३)। विजय चालिसेको धरालो कथामा बालश्रम शोषणको टिठ लाग्दो चित्रण गरिएको छ।

हिन्दीबाट अनुदित नरेन्द्रप्रताप सिंहको "पहाडी महिला" भारतको उत्तराञ्चलको पृष्ठभूमिमा लेखिएको भएता पनि नेपाली परिवेशमा उत्तिकै सान्दर्भिक छ। महिलाहरुलाई दोश्रो दर्जाको मानिस मान्ने धारणा समाजमा अझै यथावत छ। आत्माराम शर्माको "ब्रत" मा आफ्नो पतिको दीर्घायुको लागि ब्रत लिँदा चन्दाको मृत्यु हुन्छ। महिलाकै समस्यालाई लिएर प्राचीमा विनोद घिमिरे, कमला पराजुलीका कथाहरु छापिएका छन्।

साहित्यकार वर्तमानप्रति इमान्दार एवं संवेदनशील हुन्छन्। समाजमा देखिएका समस्याप्रति रचनाकार निगरानी गर्छदछन्। तिनको दूरगामी प्रभावको सम्बन्धमा विमर्श गर्छन्। त्यसपछि आफ्ना सृजनामार्फत् सन्देश दिन्छन्। प्राचीका अघिल्ला अंकमा प्रकाशित कथाकारले प्रजातन्त्र स्थापनापश्चात् पनि जनताले आधारभूत अधिकारबाट वञ्चित हुनुपरेको अवस्थाको चित्रण गरेका छन् (*नारायण ढकाल, विमल निभा, विवश वस्ती, आत्मारामका कथा*) तर स्थितिमा परिवर्तन भएन। नेपाली समाजको द्वन्द्व तथा त्यसबाट सृजित सामाजिक संवेदनाप्रति श्रष्टाहरु निस्पृह रहेका छैनन्। प्रजातन्त्र बहालीका निम्ति मूलरुपमा सक्रिय रहेका राजनीतिक शक्तिहरुको सत्ता लिप्सा, अवसरवाद, दोहोरो मापदण्डको व्यवहारबाट जनतामा छाएको कुण्ठा, आक्रोश, अक्षमकतालाई कथाकारहरुले राम्ररी पहिचान गरेका छन्। विजय (विहा भोज) र सोनम (सर्प र मान्छे) मात्रै होइन "टोलभित्र" का मानिसहरु पनि विप्लवी स्वरुप स्वीकार गर्न तम्सिएका छन्।

आफ्नो आँगनमा थुप्रै खाते पालेर राख्ने काठमाण्डौं नगरपालिका महानगरपालिका भएपछि त्यहाँका खातेहरुलाई नयाँ जीवनको आशा छैन, भन्छन् "अब हामी महानगरका खाते भयौं।" खातेको बारेमा आत्माराम शर्मामात्र होइन, मनु ब्राजाकीको कथा पनि जल्दोबल्दो फुच्चे नेपाल आफै खातेको हालतमा रहेको बोल्छ। बालकृष्ण कट्टेलको बारुदजी जस्ताले कहिले बन्दूक बिसाउने हुन् टुङ्गो छैन। बदूकको कारण बालबालिकाको मनमा "डर" ले बास जमाएको बताउँछन्- सुधीर यादव। तर, मञ्जु खनालको बालक भने निडर भएर हत्या, हिंसा, आगजनी, बम विस्फोटको समाचार छापिएको पत्रिका बेचेर पैसा कमाउन तल्लीन छ। जीवीकोपार्जनको समस्या र महानगरीय संस्कृतिको भेलमा बालबालिकाको सरलता, अबोधपना, निष्कपटता "हराएको बालपन" खोज्ने प्रयास गर्छिन्, कथाकार खनाल।

प्राचीमा प्रकाशित कथाहरुलाई सरसर्ति हेर्दा मानवअधिकारका हरेक पक्षलाई समेट्ने प्रयास भएको छ। महिलाको समस्यालाई पहिल्याउँदै कमला पराजुली, विनोद घिमिरेबाहेक अन्यले कलम चलाएका छैनन्। जातीय विभेद र छुवाछूतको विषय पूर्णत: अछूत हुने थियो, विनय कसजूले "रामायणको काँडा" ननिकालिदिएको भए।

**प्राचीका कविता**

अघिल्ला अंकहरुमा पृष्ठ ४ कविताको लागि सुरक्षित राखिएको पाइन्छ। पछि गएर यत्रतत्र ठाउ पाए पनि कवितालाई उपेक्षा गरेको भन्न मिल्दैन। किनभने अधिकांश कविताको स्तरले आफ्नो ठाउ आफैले उच्च राखेका छन्।

यथार्थवादी कवि गोपालप्रसाद रिमालको दृष्टिकोण नै आधुनिक नेपाली कविताको स्वर हो भन्दा अत्युक्ति नहोला। कविता मनोरञ्जन, बौद्धिकविलास मात्र नभई समाजलाई उन्नत, सुसंस्कृत र सम्पन्न बनाउनसक्ने माध्यम पनि हो। यस्तै मान्यताका आधारमा प्राचीका कवितालाई स्वीकार गर्न सकिन्छ। कविहरुले समकालीन नेपाली समाजलाई कलात्मकताकासाथ शब्दमा उतारेका छन्।

बहुदलीय व्यवस्थाको पुनर्स्थापना भएको झण्डै तीन वर्षपछि प्राचीको प्रकाशन शुरु भएको हो। त्यसैले यसमा प्रकाशित कवितालगायत् साहित्यका अन्य विधामा परिवर्तनको स्पष्ट छाप देख्न सकिन्छ। पंचायतकालको निरंकुशताविरुद्ध कलम चलाउने श्रष्टाहरुले खुला वातावरण पाएपछि त नेपाली कविताको स्वर तिखो र निखार भएको छ "सारत: परिवर्तित राज्यसत्ता र पुरानो व्यवस्थामा भिन्नता नभएको जनमानसिकताको यथार्थको धरातलबाट नै जनआन्दोलनपछिका कविहरुले कविताको कथ्य वा स्वर ग्रहण गर्न पुगेका छन्" (गरिमा, ०५२)। समालोचक जगदीश भण्डारीको उपरोक्त भनाईलाई पुष्टि गरेका छन्, प्राचीमा प्रकाशित कविताहरुले। हेरौं केही नमूना :

"स्यालहरु मान्छेका सुख किन्छन् र हुँडारलाई बेच्दछन्" (*राजव, प्राची वर्ष १ अङ्क १*)

"संसद भवनबाट एकाएक हरायो प्रजातन्त्र

त्यसपछि कसैले भेटेको छ प्रजातन्त्र ?" (*श्यामल, प्राची वर्ष १ अङ्क २*)

"निर्यात गर्‍यो मेरो देशमा हिंसाको संगीत" (*विमल निभा, वर्ष १ अङ्क ३*)

"खुट्टा के भयो भनेर उसलाई धेरै सोध्छन्

गर्व होइन दुखकासाथ कान्छाराम जवाफ दिन्छ

झुटो सपनाले खायो।" (*शार्दूल भट्टराई, प्राची वर्ष २ अङ्क १*)

"बमवर्षक हवाईजहाजमा उडेर न्याय यात्रामा

"सरिक हुन्छन् त्यहाँका सैनिकहरु" (*गोविन्द वतमान, प्राची वर्ष १ अङ्क ६*)

"मानौं मागका वर्षा भइरहेछ
र दावीको बाढी आइरहेछ
बाढीले डील र बाधहरु भत्काउदैछ
र किनाराका सुकुम्बासी वस्तीहरु बगाउदैछ।"

(*हरिगोविन्द लुइँटेल, प्राची वर्ष ३ अङ्क ३*)

"मौका परे मन्त्री नै भइन्छ
तसर्थ म पनि उम्मेदवारी दिउ कि?"
(*मनरुप नेप्चून, प्राची वर्ष ५ अङ्क ६*)

"तिनीहरुसँगै बेपत्ता छ आन्दोलनको मर्म" (*अग्नीशिखा, प्राची पूर्णाङ्क ३४*)

प्रजातन्त्रको पतनोन्मुख अवस्था, सशस्त्र द्वन्द्व र साम्राज्यवादविरुद्ध लक्षित छन्, प्राचीमा प्रकाशित कविताहरु। यसबाहेक मूर्धन्य कविहरुका पूर्वप्रकाशित कविता र विदेशी कविताको पनि प्राचीका पाठकले आस्वाद गर्न पाएका छन्।

व्यंग्य आफैमा विधा होइन। विसंगति, विकृति, पाखण्ड एवम् पतित समाजमा लेखिने हरेक सार्थक लेखनमा व्यंग्यको उपस्थिति आफसे आफ हुने गर्दछ। प्राचीमा कृपया क्षमा गर्नुहोस् नामक स्तम्भमा प्रकाशित सबै रचना व्यंग्यात्मक छन्। कुन्दन अर्याल, नरनाथ लुइँटेल, राजव, विमल निभा र विवश वस्तीका रचनाले यस स्तम्भलाई गहकिलो बनाएका छन्। पछिल्लो समयमा यो स्तम्भ बन्द भएता पनि केपी थर्पालियाको "छिम्स" बाट त्यसको अभाव पूर्ति गर्ने प्रयास भएको छ।

गर्नुपर्ने कुरामा जोड दिँदै यसको व्यवहारिक प्रतिबद्धताको समीक्षा गर्नुपर्ने खाँचो औंल्याइएको थियो। चैत, बैशाख र जेठ ०५४/५५ को प्राचीको पूर्णाक २२ जनआन्दोलन स्मृति विशेषका रुपमा प्रकाशित भएको थियो। उत्सर्गको गाथा शीर्षकको सम्पादकीय रहेको उक्त प्राचीमा आव्हान गरिएको थियो- "जनआन्दोलनले स्थापित गरेका आदर्शको आगोलाई सुरक्षा गरौं, जोगाऔं। वलिदानको यो विरासतलाई, प्रजातन्त्र स्थापनाको निम्ति भएको उत्सर्गको गाथालाई पुस्तौंपुस्ता हस्तान्तरण गर्दै जाऔं।" राजनीति र मानवअधिकारको अन्तर्सम्बन्धका बारेमा प्राचीले आफ्नो स्पष्ट धारणा राखेको छ- पूर्णाक २४ मा। राजनीतिक शुद्धता र प्रतिबद्धताबेगर न मानवअधिकारको सम्मान हुन्छ, न प्रजातन्त्रकै संरक्षण हुन्छ भन्ने कुरालाई प्राचीको यो अंकमा जोड दिइएको छ। प्राचीको पच्चीसौं अंकमा आफ्नै यात्राको बारेमा प्राचीको सम्पादकीय केन्द्रित छ। पच्चीसौं अंकसम्म पार गरेका घुम्ती र मोडहरुको बारेमा उल्लेख गरिएको छ।

प्राचीको पूर्णाक २३ मा कहिल्यै ननिभ्ने प्रकाश शीर्षकमा अथक मानवअधिकार योद्धा स्व. प्रकाश काफ्लेको सम्झनामा समर्पित सम्पादकीय छ। सम्पादकीयमा हामी उहाँलाई देवताको रुपमा होइन एउटा मार्गदर्शक, जीवन्त द्रष्टा र कर्मशील मान्छेका रुपमा श्रद्धा गर्छौं। प्राचीको साउन ०५६ को अंकमा पनि प्रकाश काफ्लेकै स्मृतिमा सम्पादकीय लेखिएको छ।

प्राचीको २७ औं अंकमा बाँधा, कमैया र हरुवा-चरुवाहरुको सवालमा सरकारी बेवास्ताको आलोचना गरिएको छ। प्राचीको २९ औं अंकमा "तब मालिकहरुको साम्राज्यमा भूईंचालो जान कसले रोक्न सक्छ?" शीर्षकमा र ३० औं अंकमा "जारी रहनुपर्छ आन्दोलन भोलिका दिनहरुमा पनि" शीर्षकमा कमैया मुक्तिको सवाललाई अगाडि सारिएको छ। प्राचीको २८ औं अंक शहीद विशेष अंकका रुपमा प्रकाशित छ जसमा राजनीतिक हत्याको सवाललाई उठाइएको छ। साहित्यिक क्षेत्रबाट उठाइएका मानवअधिकारका सवालहरुमा केन्द्रित भएर प्राचीको पूर्णाक ३१ नेपाली साहित्य र मानवअधिकार विशेषांकका रुपमा प्रकाशित छ। "दिवंगत भएको छैन मानवअधिकारको तिर्सना" शीर्षक रहेको उक्त अंकको सम्पादकीयमा वरिष्ठ साहित्यकारहरुले आफ्ना साहित्यिक कृतिहरुमार्फत् कसरी मानवअधिकारको सन्देश दिनुभएको छ भन्ने कुरा उजागर गर्दै उल्लेख गरिएको छ, "प्राचीको प्रस्तुत अंक दिवंगत तिनै स्रष्टाहरुमा समर्पित छ- जसको सिर्जना दिवंगत भएको छैन र जसको सिर्जनामा अभिव्यक्त मानवअधिकारको तिर्सना पनि दिवंगत भएको छैन। तिनका तिर्सना तृप्त पार्ने मुहानको खोजीमा लागिरहनेछ प्राची निरन्तर। निरन्तर।"

मंसिर ०५७ को अंकमा विश्वभर महिलाहरुले भोग्नुपरेको अत्याचारका प्रकृतिबारे चर्चा गरिएको सम्पादकीय लेखिएको छ जसले महिला मुक्ति आन्दोलनलाई झकझकाउने काम गरेको छ। "मौनता मृत्यु हो/तिमी बोल्छौ भने मारिन्छौं/नबोल्दा पनि मारिन्छौ तसर्थ,/ बोल र मृत्यु स्वीकार गर।" अल्जेरियन कवि ताहर जाउतको कविताको अंक उक्त सम्पादकीयमा समावेश गरिएको छ। प्राचीको पूर्णाक ३३ मा बेपत्ता पारिएकाहरुको सवाललाई उठाइएको छ भने पूर्णाक ३५ मा सरकार र माओवादी हिंसाका कारण उत्पन्न स्थितिलाई।

साउन ०५८ को अंकमा देशमा शान्तिको अपरिहार्यताबारे चर्चा गर्दै त्यसका लागि मानवअधिकार संस्थाहरुको दायित्वबारे उल्लेख गरिएको छ भने सोही वर्षको असोजको अंकमा "आतंकवाद चाहिँदैन, युद्धको विभिषिका चाहिँदैन" शीर्षकमा सम्पादकीय लेखिएको छ। उक्त सम्पादकीयमा अमेरिकामा भएको आतंकवादी हमला र आतंकवाद नियन्त्रणका नाममा अमेरिकी कदमबारे टिप्पणी गरिएको थियो। प्राचीको ४० औं अंकमा "यस्ता कारवाही बन्द गरियोस्" शीर्षकको सम्पादकीयमा औंल्याइएको छ- "राजनीतिक-रणनीतिक स्वार्थपूर्तिको सवालमा आम जनतालाई ढाल बनाउनु, भजाउनु र पिस्नु, तिनको हितमाथि प्रहार









प्रतिवेदनले राजनीतिक तथा सामाजिक वृत्तमा विश्वसनियता आर्जन गर्न नसकेको तथ्य उजागर गर्दै फितलो सुरक्षा संयन्त्र र सरकारी व्यवहारको आलोचना गरिएको छ। अर्को विशेष सम्पादकीय प्राचीको ३८ र ३९ औं संयुक्तांकमा प्रकाशित छ। देशमा संकटकाल लागेपछिको सो अंकमा भनिएको थियो- "सरकार, प्रतिपक्षी पार्टीहरु, मानवअधिकार संस्थाहरु, नागरिक समाज र हामी सारा शान्तिकामी नेपालीले माओवादीहरुको हिंसाप्रेमलाई औंल्याएर मात्र मुक्ति पाउन सक्दैनौं। नेपाली धर्तीमा शान्तिको स्थापनाका निम्ति चालिनुपर्ने कदमहरुको कार्यसूचीमा केवल जंगली कारवाहीलाई दर्ज गरेर हामी दीर्घकालीन शान्तिको बाटो खोल्न सक्दैनौं।" ०५९ असोज-कार्तिकको प्राचीको ४३ औं अंकमा पनि विशेष सम्पादकीय प्रकाशित छ। "संकटकालपछिको संकट" शीर्षकको उक्त सम्पादकीयमा ०५९ असोज १८ को शाही कदमको विश्लेषण गरिएको छ र भनिएको छ- "यो बेलामा हामीले धेरैको बलिदान र तीन दशकको संघर्षबाट पाएको प्रजातन्त्रको सारलाई कसरी जीवित राख्न सक्छौं भन्ने कुरा ठूलो चिन्ताको विषय बनेको छ।" प्राचीको ४९ औं अंकको विशेष सम्पादकीय जोखिममा परेका मानवअधिकार रक्षकहरुको सवालमा केन्द्रित छ। "शान्ति शब्दमात्र होइन सम्पूर्ण व्यवहार हो। यसर्थ, शान्ति सबै सिद्धान्तहरुको आधार पनि हो। शान्तिको कुरा गर्दा त्यसभित्र सामाजिक न्याय, नागरिक स्वतन्त्रता, नागरिक हकका कुराहरु गाँसिएर आउँछन्। हाम्रो शान्ति अभियानले जनताको नेतृत्व र स्वामित्वलाई पथप्रदर्शक सिद्धान्तको रुपमा अंगिकार गरेको छ।" सम्पादकीयमा उल्लेख गरिएको छ।

यसरी प्राचीले मानवअधिकार तथा प्रजातान्त्रिक मूल्य र मान्यताहरुलाई आत्मसात गर्न र व्यवहारमा मानवअधिकार अनुभूत हुनसक्ने स्थितिको स्थापना गर्न सम्बन्धित पक्षहरुलाई झक्झकाएको छ। यसले केवल उपदेश मात्र दिएको छैन, मानवअधिकार संस्कृतिको स्थापनाका लागि साँच्चिकै सुस्पष्ट दृष्टिकोण प्रस्तुत गरेको छ।










प्राचीले खासखास बेलामा विशेष सम्पादकीयमार्फत् आफ्नो अडान र दृष्टिकोण अगाडि सार्ने गरेको छ। जेठ ०५८ को प्राची राजदरबार हत्याकाण्डका बारेमा केन्द्रित थियो। उक्त अंकमा समावेश गरिएको विशेष सम्पादकीयमा दरबार हत्याकाण्डलाई अत्यन्त दुःखदायी र अत्यन्त निर्मम घटनाको रूपमा लिंदै भनिएको छ- 'त्यस घटनाले शान्तिप्रिय तथा कोमल हृदयका नेपाली जनतालाई यतिविघ्न स्तब्ध र यतिविघ्न सन्त्रस्त बनाएको छ कि, त्यसको मानसिक असरबाट मुक्त हुन जनतालाई धेरै समय लाग्नेछ।' सम्पादकीयमा उक्त हत्याकाण्डको छानबिन प्रतिवेदनले राजनीतिक तथा सामाजिक वृत्तमा विश्वसनियता आर्जन गर्न नसकेको तथ्य उजागर गर्दै फितलो सुरक्षा संयन्त्र र सरकारी व्यवहारको आलोचना गरिएको छ।

# प्राची र साहित्य

- आभास शर्मा

"नेपालमा संगठित मानवअधिकार आन्दोलनको थालनी हुनु भन्दा धेरै अगाडिदेखि साहित्यकारहरुले मानव अधिकारसंग सम्बन्धित सवाललाई उठाउदै आएको यथार्थ हाम्रो सामु छ। न्याय, समानता, प्रजातन्त्र एवं राष्ट्रियताको पक्षमा संचालित साहित्यिक आन्दोलनको रुपमा एउटा मानवअधिकार आन्दोलनको रुपमा रहेको कुरालाई स्वीकार गर्नै पर्छ।" *(शार्दूल भट्टराई, प्राची पूर्णाङ्क ३१)*

"मानवअधिकार भनेको मनुष्यलाई उसको आत्मप्रतिष्ठा र आत्मसुरक्षाका साथ सम्मानपूर्वक जीवन व्यतित गर्न पाउने भौतिक अधिकार हो। साहित्यको मूल आदर्श पनि त्यही मानिसलाई दरिद्रता, अशिक्षा, दमन, तिरस्कार आदिवाट मुक्त हुने चेतना दिएर प्रतिष्ठापूर्ण जीवनको स्थान दिलाउनु हो। र, मनुष्यको व्यक्तित्वको सर्वाङ्गिण विकास गर्ने चेतना दिलाउनु हो। साहित्यकारका युद्ध पनि मानवअधिकारको लागि हुने युद्धको एक अभिन्न अंग हो।" *(गोविन्द भट्ट, प्राची पूर्णाङ्क ३१)*

"विश्व साहित्यको सन्दर्भ हेर्दा जबदेखि साहित्य लेखनको सुरुवात भयो मानवअधिकार बारे त्यतिखेर देखि नै लेखेको पाइन्छ। त्यसो त कुनै पनि लेखक मानवअधिकारविरुद्ध जान सक्दैन। नेपाली साहित्यमा मानवअधिकार विरुद्ध लेखकहरु जान नसक्ने लेखकीय धर्म नै बनिसकेको छ। जनतालाई मानवअधिकार विरोधी साहित्यको माध्यम ठीक मात्र होइन दिगो पनि हुन सक्छ।" *(ध्रुवचन्द्र गौतम, प्राची पूर्णाङ्क ३१)*

त्यसकारण प्राचीमा साहित्यले महत्वपूर्ण स्थान पाएको छ। यस क्रममा प्राचीको अङ्क ३१ "साहित्य र मानवअधिकार" विशेषाङ्कको रुपमा प्रकाशित छ। सामग्री चयन र विषयको छनौटको दृष्टिकोणले यो अङ्क आफैमा परिपूर्ण छ।

**प्राचीका कथाहरु**

कथामा रहने चाखलाग्दो कथ्य तथा पात्र, विविध परिवेश र मानव जीवनको नौलो-नौलो चित्रणका कारण, कथा साहित्यको सबैभन्दा आकर्षक एवम् सशक्त विधा मानिन्छ। स-साना बालबालिकादेखि बृद्धसम्म, सामान्य पाठकमात्रै होइन, विद्वत्वर्गसमेतले सजिलै बुझ्ने भएकाले कथा विधा लोकप्रिय पनि छ। त्यसकारण प्राचीमा यो विधा उपस्थित छ- कथा औ लघुकथाका रुपमा। अनि अनुदित कथाले पनि यथोचित सम्मान पाएको छ चाहे त्यो तोल्सतोयको होस् वा नरेन्द्रप्रताप सिंहको कथा। आधुनिक नेपाली कथाकारको अघिल्लो पुस्ताको प्रतिधित्व रमेश विकलको कथामात्रै होइन पछिल्लो पुस्ताका विजय चालिसेका रचनालाई पनि प्राचीले समेटेको छ।

छयालीस सालपछिको खुला परिवेशमा नेपाली जनताका लुप्त आकांक्षा सतहमा देखा परेता पनि तीप्रति संस्थापन पक्षको उदासीननालाई राजनीतिककर्मीले गम्भीरतापूर्वक लिएनन्। नर, नेपाली साहित्यकारले त्यस्ता विषयलाई उपेक्षा गरेनन्। बरु आफ्ना रचनामार्फत् सबैको चेतनालाई ब्युँझाउन अघि सरे। प्रजातन्त्र जनआकांक्षाअनुरुप नभएको आमनिर्वाचनको लगत्तै अनुभव हुन थालेको थियो। राजनीतिक दलहरुले आफूखुशी प्रजानन्त्रको उपयोग गर्न थालेका थिए। यसरी नै मुलुकमा नयाँ प्रजातन्त्रको अभ्यास नयाँ तरिकाबाट अघि बढ्यो। र सबै दलहरुले आ-आफ्नै किसिमबाट त्यसलाई उपयोग गरे (नारायण ढकाल, प्रजातन्त्रको उपयोग, प्राची अङ्क १)। ०४९ प्राची अंक ३-५ मा कथाकार ढकालको अर्को कथा प्रकाशित छ- शासन कला, जसमा पंचायतकालीन स्थानीय नेताको "कला" देखाइएको छ। त्यस्तै कलाले पंचायती व्यवस्था चलेको थियो।

बहुदलीय व्यवस्था पुनर्स्थापना भएको दुई-तीन वर्षपछि नै नेताहरुको चारित्रिक स्खलनलाई साहित्यकारहरुले आँकेका थिए। नेताहरुको उपयोग मान्छे हँसाउने स्तरमा झर्‍यो (राजव, आजको बीरबल हँसाउने नेताहरु, अङ्क २)।

पंचायतकालका खाँटी पञ्च बहुदलीय व्यवस्थामा प्रजातन्त्रवादी भएकोमा व्यंग्य गर्दछन्, कथाकार खगेन्द्र संग्रौला। "मान्छे र सर्प" का विपिन तल्लोस्तरका चाकडिया पञ्च हुन् भने जङ्गबहादुरले सामन्तवादको प्रतिनिधित्व गर्छन् जो बदलिएको परिस्थितिमा मानवअधिकारवादी नेता भएका छन्। उसको चरित्र भने जस्ताको त्यस्तै छ- गरिब सोनामलाई आफ्नो कुकुरभन्दा माथ्लो दर्जामा राख्दैन। सोनामले जङ्गबहादुरको वास्तविकता बुझ्दछ। भनाई र गराईमा फरक व्यवहार गर्ने जङ्गबहादुरलाई सोझो सोनामले सर्प देख्छ,। उमाथि आक्रमण गर्छ।

विवश वस्तीको "टोल भित्रका" मानिसहरु पनि सहज जीवन बाँच्न नपाएपछि खलपात्र धनञ्जय साहुलाई आफै कारवाही गर्ने टुंगोमा पुगेका छन्। विधिको शासनप्रति नेपाली जनता ०४८-४९ सालतिर विश्वस्त हुन छाडिसकेका थिए। त्यसकारण विमल निभाको ठानालाई प्रहरी चौकीको रुपमा लिन सकिन्न। सिंगो मुलुकलाई एउटा ठाना को रुपमा हेर्नुपर्छ।

खगेन्द्र संग्रौलाको "बिहाभोज" मा दुई कम्युनिष्ट पात्रमध्येको चक्रप्रसादमा आएको परिवर्तनलाई उनकै छोरी मुनिताले यसरी दाँज्दछिन् "उबेला जहाँ पनि मेरा बुबाको सुनाम नै सुनाम सुनिन्थ्यो। अहिले जता कान थापेर सुन्नुहोस्, जहाँ पनि दुर्नाम नै दुर्नाम सुनिन्छ।" चक्रप्रसाद अहिले गाउँ-गाउँमा भेटिन्छन्। त्यसकारण पनि देविका तिमिल्सिना कमलालाई "अर्को उज्यालोको खोजी" मा लगाउन पुगेका छन्। तर लामो समयदेखि वाम राजनीतिमा सक्रिय रहेको "मेरो कथाको पात्र" मधुले पार्टी कार्यकर्ताको अधोपतन आफ्नै जीवनकालमा देखेको हुन्छ। उसको मृत्यु भएको ४५ दिनपछि उसकी छोरीको उपचारको अभावमा मृत्यु हुन्छ। कथामा इमान्दार मानिसको त्रासदीको चित्रण छ। मूल्यहीनताको संस्कृति बढेको, कथाले इङ्गित गरेको छ।

दासप्रथाको अवशेषको रुपमा रहेको कमैया प्रथा उन्मूलन गर्ने क्रममा इन्सेकले उल्लेखनीय भूमिका निर्वाह गरेको सर्वविदित छ। प्राचीको अङ्क २९ कमैया आन्दोलन विशेषाङ्कको रुपमा प्रकाशित छ। यसमा भारतका प्रसिद्ध साहित्यकार प्रेमचन्दको कथा "सवा सेर गहुँ" अनुदित छ। आधा शताब्दीभन्दा अगाडि लेखिएको यस कथाको

सान्दर्भिकता भने यथावत छ। नेपाल र भारत दुवै मुलुकका कमैयाको अवस्था मिल्दोजुल्दो छ। श्रम शोषणको रुप र स्वर समान छ। नेपालमा कमैया मुक्ति गरिएको वर्षौं बितिसक्दा पनि उनीहरुको जीवनस्तरमा कुनै सकारात्मक सुधार आउन सकेको छैन। हजारौं "रामजीवन" अलपत्र जीवन बाँच्न बाध्य छन् (समीर नेपाल, अङ्क ३३)। विजय चालिसेको धरालो कथामा बालश्रम शोषणको टिठ लाग्दो चित्रण गरिएको छ।

हिन्दीबाट अनुदित नरेन्द्रप्रताप सिंहको "पहाडी महिला" भारतको उत्तराञ्चलको पृष्ठभूमिमा लेखिएको भएता पनि नेपाली परिवेशमा उत्तिकै सान्दर्भिक छ। महिलाहरुलाई दोश्रो दर्जाको मानिस मान्ने धारणा समाजमा अझै यथावत छ। आत्माराम शर्माको "व्रत" मा आफ्नो पतिको दीर्घायुको लागि ब्रत लिँदा चन्दाको मृत्यु हुन्छ। महिलाकै समस्यालाई लिएर प्राचीमा विनोद घिमिरे, कमला पराजुलीका कथाहरु छापिएका छन्।

साहित्यकार वर्तमानप्रति इमान्दार एवं संवेदनशील हुन्छन्। समाजमा देखिएका समस्याप्रति रचनाकार निगरानी गर्दछन्। तिनको दूरगामी प्रभावको सम्बन्धमा विमर्श गर्छन्। त्यसपछि आफ्ना सृजनामार्फत् सन्देश दिन्छन्। प्राचीका अघिल्ला अंकमा प्रकाशित कथाकारले प्रजातन्त्र स्थापनापश्चात् पनि जनताले आधारभूत अधिकारबाट वञ्चित हुनुपरेको अवस्थाको चित्रण गरेका छन् (*नारायण ढकाल, विमल निभा, विवश वस्ती, आत्मारामका कथा*) तर स्थितिमा परिवर्तन भएन। नेपाली समाजको द्वन्द्व तथा त्यसबाट सृजित सामाजिक संवेदनाप्रति श्रष्टाहरु निस्पृह रहेका छैनन्। प्रजातन्त्र बहालीका निम्ति मूलरुपमा सक्रिय रहेका राजनीतिक शक्तिहरुको सत्ता लिप्सा, अवसरवाद, दोहोरो मापदण्डको व्यवहारबाट जनतामा छाएको कुण्ठा, आक्रोश, अकर्मण्यतालाई कथाकारहरुले राम्ररी पहिचान गरेका छन्। विजय (विहा भोज) र सोनम (सर्प र मान्छे) मात्रै होइन "टोलभित्र" का मानिसहरु पनि विप्लवी स्वरुप स्वीकार गर्न तम्सिएका छन्।

आफ्नो आँगनमा थुप्रै खाते पालेर राख्ने काठमाण्डौं नगरपालिका महानगरपालिका भएपछि त्यहाँका खातेहरुलाई नयाँ जीवनको आशा छैन, भन्छन् "अब हामी महानगरका खाते भयौं।" खातेको बारेमा आत्माराम शर्मामात्र होइन, मनु ब्राजाकीको कथा पनि जल्दोबल्दो फुच्चे नेपाल आफै खातेको हालतमा रहेको बोल्छ। बालकृष्ण कट्टेलको बारुदजी जस्ताले कहिले बन्दूक बिसाउने हुन् टुङ्गो छैन। बदूकको कारण बालबालिकाको मनमा "डर" ले बास जमाएको बताउँछन्- सुधीर यादव। तर, मञ्जु खनालको बालक भने निडर भएर हत्या, हिंसा, आगजनी, बम विस्फोटको समाचार छापिएको पत्रिका बेचेर पैसा कमाउन तल्लीन छ। जीवीकोपार्जनको समस्या र महानगरीय संस्कृतिको भेलमा बालबालिकाको सरलता, अबोधपना, निष्कपटता "हराएको बालपन" खोज्ने प्रयास गर्छिन्, कथाकार खनाल।

प्राचीमा प्रकाशित कथाहरुलाई सरसर्ति हेर्दा मानवअधिकारका हरेक पक्षलाई समेट्ने प्रयास भएको छ। महिलाको समस्यालाई पहिल्याउँदै कमला पराजुली, विनोद घिमिरेबाहेक अन्यले कलम चलाएका छैनन्। जातीय विभेद र छुवाछूतको विषय पूर्णतः अछूत हुने थियो, विनय कसजूले "रामायणको काँडा" ननिकालिदिएको भए।

**प्राचीका कविता**

अघिल्ला अंकहरुमा पृष्ठ ४ कविताको लागि सुरक्षित राखिएको पाइन्छ। पछि गएर यत्रतत्र ठाउ पाए पनि कवितालाई उपेक्षा गरेको भन्न मिल्दैन। किनभने अधिकांश कविताको स्वरले आफ्नो ठाउ आफैले उच्च राखेका छन्।

यथार्थवादी कवि गोपालप्रसाद रिमालको दृष्टिकोण नै आधुनिक नेपाली कविताको स्वर हो भन्दा अत्युक्ति नहोला। कविता मनोरञ्जन, बौद्धिकविलास मात्र नभई समाजलाई उन्नत, सुसंस्कृत र सम्पन्न बनाउनसक्ने माध्यम पनि हो। यस्तै मान्यताका आधारमा प्राचीका कवितालाई स्वीकार गर्न सकिन्छ। कविहरुले समकालीन नेपाली समाजलाई कलात्मकताकासाथ शब्दमा उतारेका छन्।

बहुदलीय व्यवस्थाको पुनर्स्थापना भएको झण्डै तीन वर्षपछि प्राचीको प्रकाशन शुरु भएको हो। त्यसैले यसमा प्रकाशित कवितालगायत् साहित्यका अन्य विधामा परिवर्तनको स्पष्ट छाप देख्न सकिन्छ। पंचायतकालको निरंकुशताविरुद्ध कलम चलाउने श्रष्टाहरुले खुला वातावरण पाएपछि त नेपाली कविताको स्वर तिखो र निखार भएको छ "सारतः परिवर्तित राज्यसत्ता र पुरानो व्यवस्थामा भिन्नता नभएको जनमानसिकताको यथार्थको धरातलबाट नै जनआन्दोलनपछिका कविहरुले कविताको कथ्य वा स्वर ग्रहण गर्न पुगेका छन्" (गरिमा, ०५२)। समालोचक जगदीश भण्डारीको उपरोक्त भनाईलाई पुष्टि गरेका छन्, प्राचीमा प्रकाशित कविताहरुले। हेरौं केही नमूना :

"स्यालहरु मान्छेका सुख किन्छन् र
हुँडारलाई बेच्दछन्" (*राजव, प्राची वर्ष १ अङ्क १*)

"संसद भवनबाट एकाएक हरायो प्रजातन्त्र
त्यसपछि कसैले भेटेको छ प्रजातन्त्र ?" (*श्यामल, प्राची वर्ष १ अङ्क २*)

"निर्यात गऱ्यो मेरो देशमा हिंसाको संगीत" (*विमल निभा, वर्ष १ अङ्क ३*)

"खुट्टा के भयो भनेर उसलाई धेरै सोध्छन्
गर्व होइन दुखकासाथ कान्छाराम जवाफ दिन्छ
झुटो सपनाले खायो।" (*शार्दूल भट्टराई, प्राची वर्ष २ अङ्क १*)

"बमवर्षक हवाईजहाजमा उडेर न्याय यात्रामा
"सरिक हुन्छन् त्यहाँका सैनिकहरु" (*गोविन्द वतमान, प्राची वर्ष १ अङ्क ६*)

"मानौं मागका वर्षा भइरहेछ
र दावीको बाढी आइरहेछ
बाढीले डील र बाधहरु भत्काउदैछ
र किनाराका सुकुम्बासी बस्तीहरु बगाउँदैछ।"
(*हरिगोविन्द लुइँटेल, प्राची वर्ष ३ अङ्क ३*)

"मौका परे मन्त्री नै भइन्छ
समर्थ म पनि उम्मेदवारी दिउ कि?"
(*मनरुप नेप्चून, प्राची वर्ष ५ अङ्क ३*)

"तिनीहरुसगै बेपत्ता छ आन्दोलनको मर्म" (*अग्नीशिखा, प्राची पूर्णाङ्क ३४*)

प्रजातन्त्रको पतनोन्मुख अवस्था, सशस्त्र द्वन्द्व र साम्राज्यवादविरुद्ध लक्षित छन्, प्राचीमा प्रकाशित कविताहरु। यसबाहेक मूर्धन्य कविहरुका पूर्वप्रकाशित कविता र विदेशी कविताको पनि प्राचीका पाठकले आस्वाद गर्न पाएका छन्।

व्यंग्य आफैमा विधा होइन। विसंगति, विकृति, पाखण्ड एवम् पतित समाजमा लेखिने हरेक सार्थक लेखनमा व्यंग्यको उपस्थिति आफसे आफ हुने गर्दछ। प्राचीमा कृपया क्षमा गर्नुहोस् नामक स्तम्भमा प्रकाशित सबै रचना व्यंग्यात्मक छन्। कुन्दन अर्याल, नरनाथ लुइँटेल, राजव, विमल निभा र विवश वस्तीका रचनाले यस स्तम्भलाई गहकिलो बनाएका छन्। पछिल्लो समयमा यो स्तम्भ बन्द भएता पनि केपी थर्पालियाको "छिम्स" बाट त्यसको अभाव पूर्ति गर्ने प्रयास भएको छ। ●



प्राची मैले सालभन्दा खोजेर पढ्छु। नेपमा लिखों के भनेको ? नी वहुवासलको यथार्थ विवरण फैलाउन्, पत्र्या अने ताजी सूचनाको भरपर्दो माध्यम मेरो लागि "प्राची" नै हुन्छ। अहिले हाम्रो समाजमा निस्कने गरेका छापा पत्रपत्रिका तथा विद्युतीय सञ्चार माध्यमको समाचार विश्लेषण गर्दा सत्य के हो ? छुट्याउन गाह्रो पर्छ। त्यति मात्र होइन, भ्रम सृजना हुन्छ। यसरी सही तथ्यपरक समाचार पाउने नागरिकहरूको हक कति समाचार माध्यमले नै सम्मान त गरेका छैनन् ? जस्तो लाग्न थाल्छ। यस्तो बेला सही सूचना प्रवाह गर्ने सञ्चारमाध्यम पाउन नागरिकहरू छटपटाउँदा प्राचीले एउटा खाली पूरा गरेको छ। प्राचीका सबै अंकहरू पढ्ने अवसरबाट म वञ्चित हुनुपर्दा दुःख लागेको छ। नेपाली जीवनमा छुटेका अंकहरू मैले पढ्दा एउटा जिउँदो इतिहास पढेको लाग्छ। नेपाली जनता के चाहन्छन् ? हाम्रो सरोकारको विषय के हो भन्नेबारे प्राचीले सही वस्तुगत ठम्याइ विश्लेषणात्मक व्याख्या गरेको हुन्छ। यो पक्ष नै प्राचीको सबभन्दा राम्रो पक्ष हो भन्ने मलाई लाग्छ। विशेष गरी शान्ति र मानवअधिकार बहालीका लागि प्राचीले जनताको आवाज बोलेको छ। स्वयं प्राची निमुखाहरूको सहारा हो, दुःखको साथी हो भन्दा गल्ती हुँदैन। तर पनि मानवअधिकारको एकोहोरो व्याख्या र विश्लेषण मात्र प्राचीले गरेको छ। जनजाति, महिला र दलितहरूको मानवअधिकारको बारेमा विश्लेषण गर्न नसक्नु यसको कमजोरी पक्ष मान्नुपर्छ। मानवअधिकारलाई राजनीतिक अधिकारको कसीटीमा राखेर मात्र हेर्ने चलनले समग्र मानवअधिकारको विकास हुँदैन। यसबारे प्राचीले आगामी दिनमा ध्यान दिनु पर्दछ। मानवअधिकारको संस्कृति विकास गर्ने हो भने उनले आफ्नो अधिकार खोज्न सक्दैनन्, [illegible] सक्दैनन्, उनीहरूको मानवअधिकारबारे हामीले बोल्नुपर्छ। अर्थात्, बालबालिकाको मानवअधिकारबारे प्राचीले हिजो भुले पनि आज भुल्न हुँदैन। समग्रमा भन्दा, मेरा दृष्टिमा प्राचीले बालबालिका, महिला, जनजाति तथा दलितहरूका मानवअधिकारबारे नगन्य मात्र सचेतना जगाउन सक्छ। यो छुटेको विषय हो। यसको अलावा मानवअधिकारका [illegible] मानवअधिकारसम्बन्धी कार्यक्रम गाउँघरमा पनि हुन्छन्। तिनलाई पनि प्राचीले समावेश गर्नुपर्छ। प्राची शहरमुखी होइन, गाउँमुखी हुनुपर्छ। यसको वितरण व्यवस्था गाउँसम्म पुग्नुपर्छ। अन्त्यमा पचासौँ अंकसम्म आइपुग्दा यसलाई [illegible] हामी खुशी छौं। आगामी दिनहरूमा प्राची प्रत्येक व्यक्तिको मानवअधिकारको पहिलो वर्णमाला बनोस् भन्ने शुभकामना।

– अधिवक्ता सुरेन्द्र थापा मगर
पोखरा-८, कास्की



अनौपचारिक क्षेत्र सेवा केन्द्र (इन्सेक) ले मानवअधिकारको क्षेत्रमा विविध किसिमबाट महत्त्वपूर्ण कामहरू गरेको छ। तीमध्ये २ वटा कार्य अति महत्त्वपूर्ण छन् भन्ने मैले ठानेको छु। पहिलो कुरा, इन्सेकका कार्यकर्ताले मानवअधिकार उल्लंघन भएका प्रत्येक घटनामा अनेक जोखिम उठाएर पनि यथासम्भव घटनास्थलमै पुगेर घटनासम्बन्धी तथ्ययुक्त विवरण सङ्कलन गर्ने काम गर्दैछन्। दोस्रो, प्रत्येक घटनाका वस्तुस्थितिलाई आफ्ना पुस्तक, पत्रपत्रिकाहरूको प्रकाशनद्वारा जनसाधारणमा सचेतना फैलाउने काम गरेको छ। इन्सेकबाट प्रकाशित हुने "इन्सेक अभियान" (मासिक), "मानवअधिकार स्थितिसूचक" (त्रैमासिक), "ह्युमन राइट्स सिचुएसन रिपोर्ट" (अंग्रेजी त्रैमासिक), "प्राची" (द्वैमासिक) र "मानवअधिकार वर्ष पुस्तक" मुख्य प्रकाशनहरू हुन्। यी सबै प्रकाशनहरूका मूल ध्येय मानवअधिकार उल्लंघनका घटनाहरू उजागर गर्नु, मानवअधिकारको जगेर्ना गर्नु र मानवअधिकारको बारेमा जनसाधारणलाई सुसूचित गर्ने, चेतना जगाउने र त्यससम्बन्धी व्यवहारिक र सैद्धान्तिक कुराको ज्ञान गराउने नै हो। तथापि, छुट्टाछुट्टै प्रकाशनले आ-आफ्नै रूपमा दायित्व र सीमा निर्वाह गरेका देखिएका छन्। जसले गर्दा प्रत्येक प्रकाशनको आ-आफ्नै महत्त्व रहेको पाइन्छ। यी प्रकाशनहरूमध्ये [illegible] वर्ष पुस्तक हो भने अल्पकालीन भए पनि "प्राची" अर्को महत्त्वपूर्ण पत्रिका हो, जसलाई संग्रह गर्न सकिएमा धेरै पनि [illegible] ज्ञान दिन सक्छ। प्राचीले विश्लेषणात्मक लेखहरू, राष्ट्रिय र अन्तर्राष्ट्रिय मानवअधिकारसम्बन्धी गतिविधिहरू पनि समेटेको हुन्छ। त्यसैले "प्राची" पठनीय र उपयोगी छ। यस्तो प्रकाशन गर्ने इन्सेकलाई धन्यवाद दिंदै यसलाई अझ विकसित गर्दै निरन्तरता दिइरहोस् भन्ने शुभकामना पनि दिन चाहन्छु। अन्त्यमा, प्राची पचासौं अंकमा प्रकाशित हुन लागेकोमा हार्दिक बधाई ज्ञापन गर्दछु।

– नेत्रदत्त ढुंगाना
अध्यक्ष, मानवअधिकार संरक्षण मञ्च, कास्की



इन्सेकद्वारा प्रकाशित "प्राची" का विभिन्न अंकहरूको अध्ययन गर्ने अवसर प्राप्त गरें। उनका आधारमा प्राची मानवअधिकारका विषयमा आफ्ना पाठकहरूलाई जागरूक, चेतनशील र सचेत गराउने कार्यमा लागेको छ भन्न सकिन्छ। "प्राची" को स्वर्ण अंक प्रकाशित हुन लागेको यस अवसरमा प्राचीले पाठक तथा आम देशवासीका आधारभूत मानवअधिकारको रक्षा तथा सम्वर्द्धन गर्ने कार्यमा थप ठोस योगदान पुऱ्याउन सफल होस् भन्ने शुभकामना व्यक्त गर्दछु।

– विश्वकल्याण पराजुली
प्राध्यापक, पृथ्वीनारायण क्याम्पस,
पोखरा, कास्की

# प्रगतिशील विचारहरु लिन सक्छौं

प्राचीका संस्थापकमध्ये एक हुनुहुन्थ्यो- सुशील प्याकुरेल। हाल राष्ट्रिय मानव अधिकार आयोगका सदस्य रहनु भएका प्याकुरेलसँग प्राचीको शुरुवात, यसका सबल पक्ष, कमिकमजोरीहरु तथा आगामी दिनमा सुधार गर्नुपर्ने सवालहरुबारे *प्रकाश ज्ञवाली*ले गरेको कुराकानी प्रस्तुत छ।



**प्राची प्रकाशनको पृष्ठभूमिबारे बताइदिनुस् न ।**

मलाई लाग्छ, यो ०२९/३० सालतिरको कुरा हो। काठमाण्डौमा बसिरहेका, बाहिरका हामी केही युवाहरु साहित्यको क्षेत्रबाट प्रगतिशील विचारधारा अगाडि बढाउन केही गर्नुपर्छ भनेर लागिपरेका थियौं। म आफू साहित्यप्रति उतिसारो संलग्न नभए पनि रुची भने राख्थें तर प्रकाश (प्रकाश काफ्ले) र अर्को साथी गोविन्द गजुरेल भने साहित्यमा रुची राख्ने भएकाले हामीहरु बसेर छलफल गर्‍यौं र एउटा प्रकाशन निकालौं भन्ने सल्लाह भयो। त्यसपछि त्यो प्रकाशनको नाम जुराउने प्रयत्न गर्‍यौं र प्रकाशले सल्लाह दियो- "प्राची" भन्ने नाम। वास्तवमा भन्ने हो भने यो प्रकाशले नामाकरण गरेको हो।

**प्राची नै भनेर कसरी नामाकरण भयो ?**

प्राचीको शाब्दिक अर्थ उदय, शुरुवात भन्ने हुन्छ। बिहानको जस्तो, मानिसहरुमा कौतुहलता आओस्, आफूभित्र रहेका विचारहरुलाई बाहिर ल्याउन् र त्यसको शुरुवात होस् भनेर हामीले "प्राची" नाम राखेका हौं।

**प्राचीको मुख्य उद्देश्य के लिइएको थियो ?**

जुन बेला नेपालमा राजनीतिक सिथिलता भइरहेको थियो, शून्यता जस्तो भएको थियो, त्यतिखेर कमसेकम साहित्यको माध्यमबाट भए पनि प्रगतिशील विचारहरुलाई अगाडि बढाऔं भनेर यसको शुरुवात गरिएको थियो।

**प्राची प्रकाशन गर्दा साहित्यिक उद्देश्य मात्र थियो कि अरु पनि ?**

यसको उद्देश्य प्रगतिशील विचारधाराको प्रचार-प्रसार गर्ने थियो। त्यतिखेर प्रकाशन स्वतन्त्रता थिएन। त्यस्तो अवस्थामा राजनीतिक प्रकाशनहरु गर्न पाउने अवस्था थिएन। मानवअधिकारको बारेमा चेतना नै थिएन, मानिसहरुले कुरा गर्न पनि थालेका थिएनन्। प्रत्येक प्रकाशनलाई अञ्चलाधीश कार्यालयमा लगेर त्यसको स्वीकृति लिनुपर्ने तथा सेन्सर गराउनुपर्ने आदि जटिलता थिए। साहित्यिक पत्रिकाले खुलेर वा स्पष्टरुपमा बहुदलीय व्यवस्थाको बारेमा बोल्दैन भन्नेखालको सोच शासकहरुमा भएर होला, साहित्यिक पत्रिकाहरुप्रति उनीहरु अलिकति खुकुलो भएको हुनाले हामीहरुले त्यो माध्यम खोजेका हौं। तर, प्राचीको पहिलो अंकदेखि नै हेर्ने हो भने त्यसमा साहित्य पनि

> प्राची जसरी विभिन्न खास-खास विषयवस्तुमा केन्द्रित भएर प्रकाशित भएको छ, त्यो सराहनीय छ। त्यसैगरी मानवअधिकारको मुद्दालाई नै उठाउने, यसमा समावेश गरिएका साहित्यिक सामग्रीहरु पनि अधिकारमुखी भएको हामीले देखेका छौं। त्यसैले यसलाई मैले नेपालमा मानवअधिकारको विषयलाई केन्द्रविन्दु बनाएको नौलो प्रकाशनको रुपमा हेरेको छु।

# कि सक्दैनौं भन्ने कुरा प्रमुख थियो

थियो, राजनीतिक विचारहरु, प्रगतिशील विचारहरु पनि थिए। त्यतिखेर प्रगतिशील विचार राख्ने दलहरु प्रायः सबै भूमिगत भएको अवस्थामा, त्यो राजनीतिक गतिविधि सिथिल भएको जस्तो कडा भूमिगत शैलीमा बसेको अवस्थामा, कुनै पनि दलसँग हामी आबद्ध पनि थिएनौं- त्यतिबेलासम्म। त्यसैले कुनै दलीय कुराहरु ल्याइएको थिएन। त्यसलाई प्रगतिशील अर्थात् त्यतिबेलाको व्यवस्थालाई चिर्नुपर्छ, स्वतन्त्रता हुनुपर्छ, भन्ने खालका विचारहरु थिए। त्यसकारण अहिले जसरी प्रजातन्त्र भन्नाले दलीय कुराहरु बुझिन्छ, त्यस्तो थिएन। त्यतिखेरको निरंकुशतावादी राजनीतिक व्यवस्थालाई परिवर्तन गर्नुपर्छ भन्ने सोचमात्रै प्राचीमा थियो।

**प्राची मासिक, द्वैमासिक कुन रुपमा प्रकाशन गरिएको थियो ?**

हामीहरुले शुरुमा प्रकाशन गर्दाखेरी त्यसलाई मासिकको रुपमा प्रकाशन गर्ने भन्यौं तर कहिल्यै पनि सकेनौं। किनभने, हामीहरुले आफ्नो घरबाट ल्याएको खर्च, पढ्न बस्दाखेरी हाम्रा अभिभावकहरुले दिएको पैसालाई उपयोग गरेर त्यसको प्रकाशन गरेका थियौं। त्यसैले हामीले मासिक रुपमा कहिल्यै पनि प्रकाशन गर्न सकेनौं।

**प्राचीको शुरुवातपछि निकै लामो समयसम्म प्रकाशन भएको देखिँदैन । किन त्यस्तो भयो ?**

एउटा आर्थिक कारण हो। अर्कोतर्फ, बहुतै जटिलता थियो। प्रेसले समेत त्यतिखेर बहुतै विचार पुऱ्याएर मात्र पत्रपत्रिकाहरु छापिदिने गर्थ्यो। साहित्यको नाममा केवल सौन्दर्यता राखेर वा मिठास भएको साहित्यमात्रै प्रकाशन गर्नुभन्दा पनि प्रगतिशील विचारहरुलाई लिन सक्छौं कि सक्दैनौं भन्ने कुरा प्रमुख थियो। त्यसैले त्यसअनुसार जान नसक्ने हो भने किन नै गर्ने भन्ने सोच हामीमा बारम्बार आइरहन्थ्यो। त्यसकारण हामीले त्यसलाई निरन्तरता दिनको लागि समस्याहरु भए। कहिलेकाहीँ त जाँगरकै समस्या हुन्थ्यो। दमनका कुराहरु, अरु झमेलाहरुले गर्दा पनि त्यसलाई निरन्तरता दिन नसकिएको हो।

**प्राचीको बारेमा ०२९/३० सालतिर सोचेर बीचमा निरन्तरता हुन नसकेको अवस्थामा एकैचोटी ०४९ सालमा आएपछि मात्र नियमित प्रकाशन हुन थाल्यो। यसरी लामो समयपछि प्राचीले निरन्तरता पाएको देखिन्छ । यो दूरी कसरी जोडियो ?**

हामीले त्यतिखेर प्रयत्न गऱ्यौं तर त्यसलाई जोगाइराख्न सकिएन। बेला-बेलामा हामीले निकालेका पनि छौं। कतिपय अंकहरु छैनन् किनभने हामीहरु त्यतिबेला व्यवस्थित भएर, कार्यालय राखेर काम गर्नेभन्दा पनि जहाँ गयो त्यहींबाट निकाल्ने गर्थ्यौं। कहिले प्रकाश धनकुटामा बस्दाखेरी त्यहींबाट प्रकाशन गर्ने, कहिले काठमाण्डौबाट प्रकाशन गर्ने काम भयो। त्यसले गर्दा हामीले निरन्तरता दिन नसकेका हौं। ०३३ ३४ सालदेखि हामी अलि बढी राजनीतिक गतिविधिहरुमा संलग्न हुन थाल्यौं, अथवा भनौं पञ्चायतविरोधी गतिविधिमा संलग्न हुन थाल्यौं। ०३५ सालमा शुरु भएको विद्यार्थी आन्दोलन जो ०३६ सालको विद्यार्थी आन्दोलन भनेर चिनिन्छ, त्यसमा हामी आफ्नो तर्फबाट लाग्यौं। त्यसपछि ०३७ साल हुँदा-नहुँदा शिक्षक संगठनको जन्म भयो, म आफू शिक्षक संगठनपट्टि बढी लाग्न थालें,

| | | |
|---|---|---|
| | प्रगतिशील साहित्य वाद विवाद र प्रतिवाद— तपाईलाई चुनौती दिन्छ | |
| पत्रपत्रिकालाई दिइने विज्ञापनमा चाकरी | **प्राची** | तथाकथित युवा लेखकका लेखकहरू— |
| | उद्देश्यहीन चलचित्र "मनको बाँध" सफल कथाको अभावमा | |

प्रकाश पत्रकारिताको माध्यमबाट पञ्चायतविरोधी गतिविधिमा लाग्न थाल्यो। पछि ०४० साल पुग्दा-नपुग्दा हामीले मानवअधिकार संरक्षण मञ्चको स्थापना गऱ्यौं। त्यसपछि ०४१ सालमा प्रजातान्त्रिक राष्ट्रिय एकता मञ्चको स्थापना गऱ्यौं। यसरी विस्तारै हाम्रो बढी समय पञ्चायतविरोधी आन्दोलन र राजनीतिक गतिविधिमा लाग्न थालेको हुनाले र ०३६ सालपछि ०३७ सालको अन्त्यसम्म अलिक खुकुलो स्थिति भएपछि अरु पत्रपत्रिकाहरु बढी प्रकाशित हुन थालेको हुनाले हामीले त्यतातिर खासै ध्यान दिएनौं। हामी अरु गतिविधिमा लागेको हुनाले समयाभाव पनि थियो। मानवअधिकार संरक्षण मञ्च स्थापना भइसकेपछि मानवअधिकारसम्बन्धी त्यसकै प्रकाशनहरुमा हामी बढी व्यस्त हुन थाल्यौं।

**०४९ सालमा कसरी प्रकाशन भयो त ?**

यो संवेदनशील कुरा छ। ०४९ सालको साउनमा हवाई दुर्घटनामा प्रकाशको निधन भएपछि एकातिर उसको सम्झनालाई चिरस्थायी गर्ने कुरा आइरहेको थियो भने अर्कातर्फ त्यतिखेरसम्म प्रकाशले स्थापना गरेको संस्था अनौपचारिक क्षेत्र सेवा केन्द्र (इन्सेक) ले अलिकति प्रभाव पार्न थालिसकेको थियो र एउटा सक्रिय संस्थाको रुपमा स्थापित भएको थियो। त्यसैले यसको एउटा नियमित मानवअधिकार प्रकाशन चाहिन्छ भन्ने कुरा आइरहेको थियो। हामीले इन्सेकको तत्कालीन कार्य समितिमा छलफल गऱ्यौं। पहिलो कुरा त प्रकाशले शुरुवात गरेको कार्यलाई चिरस्थायी गर्नुपर्छ र अर्कोतर्फ मानवअधिकारसम्बन्धी एउटा प्रकाशन हुनुपर्छ भन्ने लाग्यो। जसरी प्रकाशले आफ्नो जीवन साहित्यबाट शुरुवात गर्दै विस्तारै पत्रकारिता अनि मानवअधिकार क्षेत्रमा लगाए। त्यस्तै निरन्तरता यो प्राचीलाई दिनुपर्छ र यसलाई साहित्यबाट शुरु गरिए पनि पछि मानवअधिकारकै लागि बोल्ने

अथवा जनताको हक-हितका लागि बोल्ने पत्रिकाको रुपमा स्थापित गर्नुपर्छ भनेर हामीले प्रकाशको सम्भना, उसले शुरुवात गरेको र उसले जीवनको अन्तिम कालमा लिएको आन्दोलन- मानवअधिकार आन्दोलनको बाहकको रुपमा यसलाई इन्सेकले ग्रहण गर्नुपर्छ भन्ने सोच्यौं। यो कुरा कार्य समितिमा छलफल तथा निर्णय भएर हामीले इन्सेकबाट त्यसलाई प्रकाशन गर्न थाल्यौं।

**अहिलेसम्म प्राचीका अंकहरुलाई कसरी मूल्यांकन गर्नुभएको छ ?**

हुन त अहिले धेरै मानवअधिकार संस्थाहरुले पत्रिकाहरु, आफ्ना मुखपत्रहरु प्रकाशन गरेको हामीले देखिरहेका छौं। तर, प्राचीको एउटा विशेषता के रहेको छ भने, यसले विभिन्न विषयमा विशेषांकहरु निकालेको छ। अथवा, खास-खास क्षेत्रलाई बढी प्राथमिकता दिएर, जस्तो- रोल्पामा माओवादी गतिविधि शुरु भइसकेपछि त्यहाँको दमन र त्यसपछिको स्थिति, किन रोल्पामै विस्फोटन भयो भन्ने कुरा, त्यसैगरी कमैयाको सवाल र अरु विभिन्न विषयमा खोजमूलकरुपमा प्राचीले सामग्रीहरु प्रकाशन गरेको छ। मानवअधिकारको कोरा नारा वा कोरा सिद्धान्तको कुरा गर्नुभन्दा पनि नेपाली जनजीवनले मानवअधिकारका क्षेत्रमा भोग्नुपरेका कुराहरुलाई यसले अंगिकार गरेको छ। प्राची जसरी विभिन्न खास-खास विषयवस्तुमा केन्द्रित भएर प्रकाशित भएको छ, त्यो सराहनीय छ। त्यसैगरी मानवअधिकारको मुद्दालाई नै उठाउने, यसमा समावेश गरिएका साहित्यिक सामग्रीहरु पनि अधिकारमुखी भएको हामीले देखेका छौं। त्यसैले यसलाई मैले नेपालमा मानवअधिकारको विषयलाई केन्द्रविन्दु बनाएको नौलो प्रकाशनको रुपमा हेरेको छु। म आफूले इन्सेकको कार्यसमिति छोडेपछि यताका चार वर्षलाई हेरें भने पनि मलाई सन्तोष लाग्छ कि हामीले शुरु गरेको एउटा जुन अभियान थियो, त्यो अभियान अद्यापि संचालन भइरहेको छ। तर, जुन हिसाबले निरन्तरता पाउनुपर्थ्यो त्यसो भएको मैले पाएको छैन। मानवअधिकार पत्रिकाको रुपमा जसरी यसले आफूलाई प्रस्तुत गरेको छ, त्योचाहीं सन्तोषप्रद छ।

**यसका कमीकमजोरीहरु कसरी औंल्याउनुहुन्छ ?**

मलाई के लाग्छ भने, प्राचीको प्रकाशनमा र इन्सेकको नेतृत्वमा बसेकाहरुले एउटा छुट्टै दिमागी कसरत गर्नुपर्ने आवश्यकता छ। यसको उद्देश्य के हो, यसका पाठकहरु को हुन् र यसले दिन खोजेको के हो भन्ने बारेमा छलफल हुनु आवश्यक छ। कहिलेकाहीं एउटा अंकबाट अर्को अंक एकदमै फरकरुपमा प्रकाशन भएको पनि हामी पाउँछौं। कहिलेकाहीं यसले केही फरक बाटो लिएको पनि देखिन्छ। यसलाई स्पष्ट सोचका साथ अगाडि बढाउन सकेकोजस्तो लाग्दैन, मलाई।

**प्राची प्रकाशनका प्रतिफल के हुन् भन्ठान्नुहुन्छ ?**

मानवअधिकार आन्दोलनमै लागेका कार्यकर्ताहरु मात्र होइन, साहित्यमा लागेका, सोध-खोजमा लागेकाहरु तथा विविध चाख भएका मान्छेहरु पनि प्राची पढेर विस्तारै अधिकारमुखी हुँदै जान्छन्। कोरा नाराको रुपमा नभएर यसलाई अरु क्षेत्रका मानिसहरुलाई कसरी अधिकारमुखी बनाउने भन्ने कुरामा प्राचीले योगदान दिएकोजस्तो लाग्छ र प्रतिफल पनि त्यही हो। यसमा विभिन्न चाखलाग्दा सामग्रीहरु हुन्छन्, जसले अधिकारको कुराहरु उठाइरहेका हुन्छन्। केवल मानवअधिकार मात्र नभनेर विभिन्न किसिमबाट अरु पाठकहरुलाई एकै थलोमा ल्याएर अधिकारमुखी बनाउन सहयोग गरेकोजस्तो लाग्छ।

**प्राचीले आगामी दिनमा समेट्नुपर्ने सवालहरु के-के होलान् ?**

मलाई अहिले पनि के लाग्छ भने, विभिन्न मानवअधिकार संस्थाहरुले मानवअधिकारकै लागि प्रकाशनहरु गरिसकेको हुनाले प्राची अलि फरक हुनुपर्छ। तर, फरकको नाममा यसलाई विशुद्ध साहित्यिक वा विशुद्ध राजनीतिक वा विशुद्ध मानवअधिकार भन्ने गराउनुभन्दा पनि विभिन्न क्षेत्रका व्यक्तिहरुले पनि यसलाई चाख मानेर पढुन्, साहित्यकारहरुले पनि यसलाई पढुन्, व्यङ्ग्यकारहरुले पनि पढुन्, अझ सकिन्छ भने त्यसमा चित्रका कुराहरु, अधिकारमुखी कार्टूनहरु समावेश गर्न सकियो भने, त्यस्तै समाजका विभिन्न अंगहरु- बालबालिका, युवा र प्रौढ भएकाहरुलाई पनि चाख लाग्दा सामग्रीहरु, सबै सामग्रीहरुमार्फत् कुनै न कुनै रुपमा अधिकारका लागि सचेत हुने, संगठित हुने र अगाडि बढ्ने खालको सन्देश दिन सकिएमा प्राची प्रकाशनको औचित्य सावित हुन्छ। केवल मानवअधिकारको तथ्य-तथ्यांक प्रकाशन गर्नु मात्र यसको काम हो जस्तो मलाई लाग्दैन।

**प्राची शुरुवात गर्दा जुन सोच राखिएको थियो, त्यो पूरा गर्न के सुझाव दिनुहुन्छ ?**

यसको शुरुवात नै तत्कालीन अवस्थामा सामाजिक परिवर्तनको उद्देश्य तथा प्रगतिशील विचारधाराका साथ भएको हुनाले यसले अहिले पनि त्यो चुरोलाई कायम राखेर यसका पाठकहरुको सेरोफेरो बढाउने किसिमले अगाडि बढ्न सक्नुपर्छ भन्ने लाग्छ। जसरी अरु मानवअधिकार संस्थाहरुले आफ्नो मुखपत्र प्रकाशन गर्छन्, त्यस्तैगरी इन्सेकको मुखपत्र प्राची हुनुहुँदैन। इन्सेकका मुखपत्र "इन्सेक अभियान" लगायत्का अन्य प्रकाशन छन्। प्राचीले अन्य क्षेत्रहरुलाई कसरी समेट्नसक्छ र अधिकारमुखी आन्दोलनलाई कसरी अगाडि बढाउनसक्छ भन्ने कुरामा ध्यान दिनुपर्छ। जस्तो, अहिले विश्वव्यापीकरणको थुप्रै हल्ला चलेको छ तर विश्वव्यापीकरणभित्र मानवअधिकारको संरक्षण वा मानवअधिकारका समस्या के-के हुन सक्छन् भन्ने कुरादेखि लिएर वर्तमान साहित्य, वर्तमान आन्दोलनका स्वरुपहरु, सामाजिक आन्दोलनहरु, नेपालका विभिन्न जातीय समिश्रण, त्यसभित्रको आन्दोलन, लैंगिक कुराहरु सबैलाई समेटेर प्रकाशन गर्न सक्ने हो भने राम्रो हुन्छ। त्यसैले प्राची अधिकारमुखी हो र अधिकारका लागि गरिने विभिन्न आन्दोलनहरुलाई यसले प्रतिनिधित्व गर्छ भन्ने उद्देश्य स्पष्ट हुनुपर्छ। यसरी प्रकाशन गर्न सक्यौं भने यो एउटा सर्वथा नयाँ किसिमले, चाखलाग्दो किसिमले अगाडि बढ्नसक्छ, यसले ठूलो दायरामा पाठकहरु पनि सृजना गर्छ। ●

# हामीलाई शान्तिसंग बाँच्न देऊ



बालबालिका शान्ति क्षेत्र - राष्ट्रिय अभियान

का. जि. का. द. नं. २१/४९/५०

# के तपाई

# मानवअधिकारप्रति रुची राख्नुहुन्छ ?

मानवअधिकारका विविध सवालहरु समेटेर
तयार पारिएको
मानवअधिकार शिक्षा कार्यक्रम



हरेक शनिबार बिहान ८:३५ बजे
रेडियो नेपालबाट प्रशारण गरिन्छ ।

सुन्न नभुलौं ।

यो कार्यक्रम इन्टरनेट मार्फत् पनि
सुन्न सक्नुहुने छ ।

हाम्रो ठेगाना :
www.insec.org.np

BY AIRMAIL